● वर्ष ११ ● अङ्क २ ● आश्विन २०६६ ● पूर्णाङ्क १२२


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं

***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**


## नवदुर्गा विशेष


मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-




### सम्पर्क कार्यालयहरु


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
  फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी,
  फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट,
  फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
  फोन: ०४६-५४००११
- **पाल्पा**, तानसेन,
  फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल,
  फोन:२२२००२१
- **गोरखा**, बसपार्क,
  फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा,
  फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१,
  फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि
  फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक,
  फोन: ०६१-२२९११०
- **सिन्धुली**, रातमाटा
- **स्याङ्जा**, स्याङ्जाबजार
  फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे
  फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी
- **काठमाडौं**, पुरानोबानेश्वर,
  फोन: ०१-२१०११२६

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, कल्की मन्दिरसँगै काठमाडौँमा रहेको छ । परमपूज्य सद्गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## परामर्श सेवासम्बन्धी सूचना

सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी प्राप्त सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| स्थान | समय | बार |
|---|---|---|
| केन्द्रीय कार्यालय | साँझ ४:३० बजेपछि | सोमवार र मङ्गलवार |
| ललितपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | मंगलवार र बिहीवार |
| भक्तपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | शनिवार र बुधवार |
| बनेपा सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | प्रत्येक आइतवार |

## आश्रमका नियमित कार्यक्रमहरू

- आश्रम खुल्ने समय : प्रत्येक दिन बिहान १०:०० बजेदेखि साँझ ६:०० बजेसम्म ।
- गोरक्ष निखिल पुस्तकालय खुल्ने समय : प्रत्येक दिन १०:०० बजेदेखि साँझ ५:०० बजेसम्म ।
- परामर्श सेवासम्बन्धी भेटघाट : अपराह्न ३:०० बजेपछि ।
- आरती : प्रत्येक साँझ ५:०० बजे ।
- गुरु पूजन : प्रत्येक बृहस्पतिवार बिहान १०:०० बजेदेखि ।
- विशेष गुरु पूजन : प्रत्येक अंग्रेजी महिनाको २१ तारीख, बिहान १०:०० बजेदेखि ।
- आध्यात्मिक शक्ति अनुसन्धानमूलक नेपालको एक मात्र मासिक पत्रिका 'गोरक्ष निखिल वाणी'को नियमित प्रकाशन ।
- विभिन्न चाड-पर्व एवं अवसरहरूमा विशेष कार्यक्रम ।
- विशेष हवन: प्रत्येक महिनाको पहिलो सोमवार श्री शिव गोरक्ष हवन, पहिलो मङ्गलवार तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधवार तान्त्रोक्त महालक्ष्मी हवन र पहिलो बिहीवार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम संचालन ।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**

सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

**मुद्रण**

**भेराइटी प्रिन्टर्स प्रा.लि.**

कुलेश्वर, काठमाडौँ ।

**पत्रिकाको कार्यालय**

**बसुन्धरा, कल्की मन्दिर, काठमाडौँ, नेपाल**

**फोन नं:** २०७१२००,२१००१५३, **पत्रिका वितरण फोन नं:** ०१-६२२५१७७ (CDMA Phone), URL: www.gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

सर्वप्रथम त विजयादशमीको पावनतम अवसरमा सम्पूर्ण महानुभावहरूमा हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दै परमपूज्य सद्‌गुरुदेवहरू एवं महाशक्ति नवदुर्गा भवानीको कृपा आशीर्वाद प्राप्त भई आध्यात्मिक एवं भौतिक उन्नति प्रगति हुँदै जाओस् भन्ने प्रार्थना गर्दछौं।

असत्यमाथि सत्यको विजय, दानवी प्रवृत्तिमाथि दैवी शक्तिको विजय आदिको रुपमा मनाइँदै आइराखेको विजयादशमी यस वर्ष पनि हाम्रो सामु आइपुगेको छ। प्रत्येक चाडपर्वले आफ्नै विशेषता लिएर आउने गर्दछ। साथै प्रत्येक चाडपर्वभित्र गूढ रहस्य पनि छिपेको पाइन्छ। बाहिरी देखावटीरुपमा मात्रै नभएर यसभित्र लुकेको गूढ रहस्यलाई उजागर गर्दै यसको वास्तविक महत्त्व बुझी फाइदा लिन सके चाडपर्व मनाउनुको सार्थकता रहन्छ। अन्यथा बाहिरी आडम्बरका लागि, देखावटी ढंगले, अनावश्यक प्रतिस्पर्धाको रुपमा पर्व मनाई मनोरञ्जनको साधन मात्रै बनाउनेतर्फ लाग्यौं भने त्यो हाम्रो लागि पनि दुर्भाग्यशाली साबित हुनसक्छ। निहत्था पशुहरूको बलि चढाई, मदिरा र मासुलाई माध्यम बनाउँदै खर्च र आडम्बर प्रदर्शन गर्ने सोच लिएर अगाडि बढ्यौं भने चाडपर्वको वास्तविक मर्म नबुझेको ठहरिनेछ।

विजयादशमीलाई हाम्रा शास्त्रहरुले शक्तिको पर्वको रुपमा लिएको पाइन्छ। शक्ति आर्जनको लागि आफ्ना कमी कमजोरी राग, द्वेष, घमण्ड, अहंकार आदिमाथि विजय प्राप्त गर्दै अगाडि बढ्नको लागि यस पर्वको आफ्नै विशिष्ट महत्त्व रहेको पाइन्छ। सत्ययुगमा माता नवदुर्गाले र त्रेतायुगमा रामले दानवी शक्तिलाई परास्त गरी दैवी सत्ताको सूत्रपात गरेको अर्थात् असत्यमाथि सत्यको विजय गरेको उल्लेख पाइन्छ। यसबाट के प्रष्ट हुन्छ भने उहाँहरुले तपाईं हामीलाई पनि आफूभित्रका दानवी प्रवृतिहरू, असत्य विचार, चिन्तन, कर्महरूमाथि विजय प्राप्त गर्दै अगाडि बढ्ने शिक्षा, प्रेरणा एवं मार्गदर्शन प्रदान गरेको पाइन्छ। त्यसैले यस पर्वमा आफूले आफैमाथि विजय गर्नेतर्फ माताको स्तुति, ध्यान, मन्त्र जप आदि गरेर उहाँको कृपा आशीर्वाद प्राप्त गर्दै अगाडि बढौं र जीवनलाई ऊर्ध्वमुखी बनाऔं।

यस अङ्कलाई ‘नवदुर्गा विशेष’को रुपमा निकालेका छौं। माता नवदुर्गाको विराटता, उच्चतालाई हामीले समेट्न सक्ने कुरै भएन, तैपनि केही अंशरुपमा भए पनि केही जानकारी दिने मात्रै कोशिश गरेका छौं।

अन्तमा पुनः यस दिव्य पर्वको भित्री महत्त्वलाई बुझौं, बाहिरी देखावटी तडकभडक, अनावश्यक खर्चको होडबाजी नगरी माताको कृपा, आशीर्वाद प्राप्त गर्नतर्फ अग्रसर होऔं भन्ने कामनासँगै यस अंकमा भए गरेका गल्ती, कमी, कमजोरीको लागि परमपूज्य सद्‌गुरुदेवहरू एवं मातासँग र यहाँहरुसँग पनि क्षमा माग्दै आवश्यक सल्लाह सुझावको अपेक्षा राख्दछौं। अस्तु।

# श्रीदुर्गा

## श्रीदुर्गाको परिचय र महिमा

देवी अथर्वशीर्ष (उपनिषद्) अनुसार सम्पूर्ण देवताहरुले एकपल्ट दुर्गालाई सोध्दछन्– 'तपाईं को हुनुहुन्छ ?' यसको उत्तरमा महादेवी स्वयंले आफ्नो परिचय दिनुहुन्छ– 'म ब्रह्म हुँ । मबाटै प्रकृति, पुरुष र जगत्, शून्य र अशून्य पैदा भएको छ । म आनन्द अनानन्द (सुख र दुःख) दुवै हुँ । विज्ञान, अविज्ञान, ब्रह्म, अब्रह्म, पृथ्वी, जल, तेज, वायु र आकाशरुप पञ्चमहाभूत र त्यसदेखि बाहेकका वस्तु सम्पूर्ण चराचर जगत् हुँ । वेद हुँ, अवेद पनि हुँ । विद्या र अविद्या पनि हुँ । अज (नजन्मने-नित्य) र अनज (जन्मने) मै हुँ । सबै दिशा- तल, माथि तेर्सो सबै हुँ । म रुद्र र वायुका रुपमा विचरण गर्दछु । आदित्य र विश्वेदेवका रुपमा हिँड्दछु । मित्र, वरुण, अग्नि, अश्विनीकुमारको स्वर्ग, मर्त्य र पाताललाई आफ्ना पाउले ढाकिदिने त्रिविक्रम विष्णु, सृष्टिकर्ता ब्रह्मा र प्रजापति समेतलाई मै धारण गर्दछु आदि ।

## श्रीदुर्गाको स्वरूप

यसरी महादेवी दुर्गा स्वयं निरञ्जन, निराकार, नाम र रुपले विहीन ब्रह्मस्वरुप भैकन पनि सम्पूर्ण विश्व ब्रह्माण्डको र सम्पूर्ण प्रपञ्चका कारण हुन् । यो उनको निर्गुण रुप हो ।

## श्रीदुर्गाको सगुण स्वरूप

दुर्गाको सगुण रुपमा भएको आविर्भावको वर्णन मार्कण्डेय पुराणको सप्तशती (चण्डी) मा पाइन्छ । महिषासुर (राँगोको रुप भएको दैत्य) ले सताएर स्वर्गबाट निकालिएका देवताहरुको आर्तपुकार सुनेर भगवान् विष्णु महादेव र ब्रह्मा पनि साह्रै रिसाए । उनका शरीरबाट ठूलो तेज निस्क्यो । त्यसपछि सम्पूर्ण देवताहरुका शरीरहरुबाट पनि एक एक गरी तेज निस्कँदै पहिलेको तेजमा मिल्दै गए । ठूलो पर्वताकार धप्धप् बलिरहेको तेज त्यसै तेज:पुञ्जबाट अत्यन्त तेजस्विनी सुन्दरी नारी प्रकट भइन् । उनका अंग-प्रत्यंग सबै तेज:पुञ्जबाटै बन्दै गए । देवताहरुले उनलाई आयुधहरु प्रदान गरे । उनले आफ्नो वाहन सिंह लिइन् । यिनै सिंहवाहिनी दुर्गा हुन् र यिनैले महिषासुरको विनाश गरिन् । यो सप्तशतीको प्रसिद्ध कथा हो ।

## दुर्गा शब्दको व्युत्पत्ति र विशेषता

'दुर्गा' शब्दभित्र 'दुर्ग' र 'आ' दुई शब्द छन् । तीमध्ये दुर्ग शब्दबाट दैत्य, ठूलो विघ्न, संसाररुपी बन्धन, कुकर्म, शोक, दुःख, नरक, यमराजको दण्ड, जन्म, ठूलो भय वा त्रास, ज्यादै ठूला रोगहरु अर्थात् जति जति प्राणी मात्रका लागि अकल्याण गर्ने कुराहरु छन् ती सबै बुझिन्छन् र ' आ' शब्द चाहिँ 'नाश'को प्रतीक हो ।

यसकारण दुर्गाका उपासनाले अकल्याणकारी वस्तुहरुको विनाश हुन्छ । फेरि दुर्गा शब्दमा द्, उ, र्, ग्, आ यी पाँच अक्षरहरु छन् । यिनीहरुका पनि बेग्लाबेग्लै अर्थहरु छन् । 'द्'ले दैत्यहरुका, 'उ'ले विघ्नको, 'र्'ले रोगको, 'ग्'ले पापको र 'आ'ले भय र शत्रुहरुको विनाशलाई प्रतीकात्मक रुपमा बुझाउँदछन् ।

दुर्ग यौटा दैत्य पनि थियो । त्यसको नाश गर्ने हुनाले 'दुर्गा' । दुर्ग विपत्ति पनि हो र त्यस्तालाई हटाउने हुनाले 'दुर्गा' । बडा दुःखले धर्म, कर्म, उपासना, तपस्याले मात्र प्राप्त गर्न सकिने हुनाले पनि 'दुर्गा' । यस्तै दुर्गा शब्दका धेरै अर्थ छन् । छोटकरीमा भन्दा अकल्याणकारी कुतत्त्व 'दुर्ग' हो र त्यसको विनाशकारिणी तत्त्व 'आ' ।

## श्रीदुर्गाका विविध रूप

दुर्गाको पहिलो रुप उग्रचण्डाको हो, दोस्रो भद्रकालीको र तेस्रो कात्यायनीको । तीनै रुपले तीनै कल्पमा महिषासुरको वध भएको थियो । रम्भासुर दैत्यको महिषी (भैंसी), स्वरुपमा राक्षसीबाट जन्मेको अत्यन्त बलवान् र पराक्रमी छोरो महिषासुरलाई सर्वप्रथम रम्भाकल्पमा अत्यन्त भयङ्कर स्वरुप भएकी उग्रचण्डाले मार्नुभयो । फेरि नीललोहित कल्पमा त्यो फेरि जन्म्यो उत्तिकै बलवान्, पराक्रमी । त्यस जन्ममा भगवती भद्रकालीले त्यसको अन्त्य गर्नुभयो ।

त्यसरी दुईपल्ट सतीका हातबाट मरेपछि तेस्रोपल्ट पनि त्यसको जन्म भयो, फेरि पनि उस्तै वीर, पराक्रमी तर दुष्ट । त्यसले गर्वोन्मत्त भएर कात्यायन ऋषिका शिष्य बृहदश्वको अपमान गऱ्यो र कात्यायन ऋषिले उसलाई एक स्त्रीको हातबाट मारिने शाप दिए ।

उसले स्वप्नमा पनि यौटी स्त्रीले नै आफूलाई मारेको देख्यो । यसैले उसले भगवती महामायाको बडो कठोर तपस्या गरी उनलाई खुशी पाऱ्यो । भगवती प्रकट भएर उसको इच्छा सोधिन् । उसले कात्यायनको श्राप र स्वप्नमा आफूलाई स्त्रीका हातबाट मरेको देखेको कुरा बताएर तेस्रोपल्ट अन्य कुन रुपबाट भगवतीले उसलाई मार्ने हो भनी सोध्यो । देवीले उग्रचण्डाको भयङ्कर रुप देखाउनुभयो । त्यस रुपबाट ऊ अत्यन्त डरायो ।

त्यसपछि देवीले भद्रकालीको डरलाग्दो स्वरुप देखाउनुभयो । त्यसबाट पनि डरायो । त्यसपछि देवीले उसैको इच्छा सोध्नुभयो । उसले अत्यन्त सुन्दर नारीको रुप लिएर उसलाई मार्ने, मार्दा उसले देवीलाई हेरिरहन पाउने, मृत्युकालमा देवीको चरण उसका छातीमा टेकिनु पर्ने वरदान माग्यो । सोही वरदानअनुरुप तेस्रोपल्ट देवीले सुन्दर कात्यायनीको रुप लिएर महिषासुरको वध गर्नुभयो । यो कथा कालिकापुराण र महाकालसंहिता आदि ग्रन्थमा पाइन्छ ।

उग्रचण्डाको स्वरुप– सुवर्णको जस्तो रुप, अनेकौं दिव्य वस्त्र, आभूषण, अठार भुजा, भुजामा खड्ग, बाण, चक्र, वज्र, अंकुश, वर, डमरु, शूल, पात्र र खेटक, धनु, गदा, घण्टा, पाश, खट्वाङ्ग, केशपाश, बिन्दुमुद्रा र सिद्धिमुद्रा, शिरच्छेदन गरिएकोले घाँटीबाट निस्केका महिषासुरका छातीमा त्रिशूल रोपेको, यो हो उग्रचण्डाको अत्यन्त डरलाग्दो विग्रह ।

दोस्रो भद्रकाली सोह्र भुजा, दिव्य वस्त्र, दिव्य आभूषण, जटाजूट, नागहरू, भुजाहरुमा शूल, खड्ग, शंख, चक्र, बाण, शक्ति, वज्र र दण्ड एवं खेटक, चर्म, धनुष, पाश, अंकुश, घण्टा, परशु र मुशल, रक्तवर्ण, त्रिनयन, बायाँ पाउले टेकेर महिषासुरलाई शूल रोपेको यो विग्रह भद्रकालीको हो ।

कात्यायनीको स्वरुप जटाजूट शिरमा अर्धचन्द्र, तीनवटा कमलको समान नेत्र, यौवना, महिषासुरमर्दिनी, दश बाहु, बाहुमा त्रिशूल, खड्ग, चक्र, बाण, शक्ति र खेटक, धनुष, पाश, अंकुश, घण्टा वा परशु, देवीको दाहितेबाट सिंहमाथि र बायाँ महिषासुरमाथि, खड्ग हातमा लिएको महिषासुरको छातीमा शूल रोपेको । यो विग्रह कात्यायनीको हो । यी तीनै स्वरुप कल्पका भिन्नताले देवी दुर्गाले लिएका स्वरुप हुन् ।

## श्रीनवदुर्गाका विविध रूप

दुर्गाका नौवटा स्वरुपहरु प्रसिद्ध छन्– उग्रचण्डा कल्पमा रुद्रचण्डा, प्रचण्डा, चण्डोग्रा, चण्डनायिका, चण्डा, चण्डवती, चण्डरुपा, अतिचण्डिका र महोग्रचण्डा यी नौ दुर्गाको उपासना हुन्छ भने भद्रकाली कल्पमा शैलपुत्री, ब्रह्मचारिणी, चन्द्रघण्टा, कुष्माडा, स्कन्दमाता, कात्यायनी, कालरात्रि, महागौरी र सिद्धिदात्री यी नौ दुर्गाको उपासना गरिन्छ ।

दुर्गाका तीन स्वरुप अर्का पनि प्रसिद्ध छन् । ती हुन्– महाकाली, महालक्ष्मी र महासरस्वती । विष्णुका शरीरबाट योगनिद्रास्वरुप महाकाली हटेकीले विष्णुले मधु-कैटभ दानवलाई मारे, महालक्ष्मीले महिषासुरको अन्त गरिन् र महासरस्वतीले सम्पूर्ण दानवसहित शुम्भ र निशुम्भको । यसको विस्तृत वर्णन मार्कण्डेयपुराणको देवीमाहात्म्य अर्थात् सप्तशती (चण्डी)मा पाइन्छ ।

दुर्गाका अरु पनि स्वरुप छन्– महिषमर्दिनी, धूलिनी, जयदुर्गा, वनदुर्गा आदि । यिनीहरुको सबै आम्नायहरुमा पूजा हुन्छ । नवै दुर्गाको समष्टिरुप चामुण्डाको पनि हो । ब्राह्मी, माहेश्वरी, वैष्णवी, ऐन्द्री, वाराही, कौमारी, नारसिंही, चामुण्डा र महालक्ष्मी । यी पनि नौ दुर्गाका रुपमा प्रसिद्ध छन् ।

वास्तवमा दुर्गा आफू यौटै भएर पनि उपासकहरुका बाधा हटाउन विभिन्न रुप ग्रहण गर्ने महामाया, महाशक्ति हुन् । दुर्गा गौरीको रुप भएकाले शैवहरुको, लक्ष्मीको रुप भएकाले वैष्णवहरुको र परमशक्तिको रुप भएकाले शाक्तहरुको उपास्या हुन्छिन् । पूर्व, पश्चिम, दक्षिण, उत्तर, ऊर्ध्व (माथि) र अध (तल) छ आम्नायकै अधीश्वरीहरु पूर्णेश्वरी, कुब्जेश्वरी, निशीश्वरी, सिद्धेश्वरी, कामेश्वरी र वज्रेश्वरी (तारा) दुर्गाकै भिन्न भिन्न रुप हुन् । दुर्गाका उपासनाले सम्पूर्ण विद्याहरुको उपासना हुन्छ । यसकारण 'दुर्गा' शब्द मात्र पनि सम्पूर्ण मन्त्रहरुमा उत्तम मानिन्छ भन्ने तन्त्रग्रन्थहरुको सम्मति छ ।

*–विद्यानाथ उपाध्याय भट्ट*

# भक्तपुरको नवदुर्गा गण

नेपालीहरुको महान् चाड शारदीय नवरात्रि (दशैं) मा मुख्यरुपले श्री भवानी नवदुर्गाको पूजा, आराधना गरी आएका छौं। देवीमाहात्म्य, देवीकवचमा श्री भवानी नवदुर्गाको स्वरुप यसप्रकारले वर्णित छ :

**प्रथमं शैलपुत्रीति द्वितीयं ब्रह्मचारिणी ।**
**तृतीयं चन्द्रघण्टेति कूष्माण्डेति चतुर्थकम् ।।**
**पञ्चमं स्कन्दमातेति षष्ठं कात्यायनीति च ।**
**सप्तमं कालरात्रीति महागौरीति चाष्टमम् ।।**
**नवमं सिद्धिदात्री च नवदुर्गाः प्रकीर्तिताः ।**
**उक्तान्येतानि नामानि ब्रह्मणैव महात्मना ।।**

**(देव्याःकवचम्)**

काठमाडौंका भक्तजनले विभिन्न नौ तीर्थहरु भद्रकाली, कालिकास्थान, नरदेवी, रक्तकाली, शोभा भगवती, तलेजु आदिमा स्नान गरी पीठहरुको दर्शनका साथै पूजा, अर्चना गरेझैं भक्तपुरबासी नवरात्र प्रतिपदाका दिन ब्रह्मकुण्ड तीर्थमा स्नान गरी ब्रह्मायणी पीठ, द्वितीया तिथिमा महेशकुण्ड तीर्थमा स्नान गरी माहेश्वरी पीठ, तृतीयामा कनककुण्डमा स्नान गरी पीठ परिसरमा कुमारी, चतुर्थीका दिन योसिंखेल चुपिंघाटस्थित वैष्णवी (भद्रकाली), पंचमीमा मंगल तीर्थमा स्नान गरी वाराही पीठ, षष्ठीमा कासांखुसीस्थित इन्द्रायणी, सप्तमीमा कालीघाटस्थित महाकाली, अष्टमीमा पेंचिकोलास्थित महालक्ष्मी, नवमीमा हनुमानघाट त्रिवेणीमा स्नान गरी त्रिपुरासुन्दरी र दशमीमा भैरवकुण्डस्थित महादेवी (महामाया नवदुर्गा भवानी) को पूजाअर्चना, आरती दर्शन गरी सिद्धि प्राप्तिका साथ विजय यात्रा गर्छन् ।

मातृशक्तिका अनेक स्वरुपहरुको अत्यधिक लोकप्रियतामा तन्त्र एवं तान्त्रिक वाङ्मयले निकै ठूलो स्थान ओगटेको छ। यसैकारण मातृशक्तिका विविध स्वरुपमा पूजा गर्ने तन्त्रको विधि विधान विशाल छ। पौराणिक ग्रन्थहरुमा मातृकाहरुको उत्पत्तिका कथाहरु वर्णित छन्। मत्स्यपुराणमा भगवान् शिवले युद्धमा अन्धकासुरलाई मार्न अनगिन्ती मातृकाहरुको उद्भव गराउनुभएको उल्लेख छ । अन्धकासुरको वध गरिसकेपछि पनि आफ्नो क्रोधलाई थाम्न नसकी भयानक रुप धारण गर्दै ती मातृकाहरुले सम्पूर्ण जगत्कै सर्वनाश गर्ने प्रयास गरे । भगवान् शिवले सृष्टि एवं संहार गर्ने अधिक शक्तिशाली मातृका गणहरुको उत्पत्ति गर्नुभई पूर्व मातृकाहरुलाई शान्त पार्नुभयो ।

शाक्त तन्त्रावलोकमा मातृशक्तिको सर्वोच्च मान्यतामा 'अ' देखि 'क्ष' सम्मका ५० अक्षरहरुलाई पचास मातृकाको रुप मानिएको पाइन्छ। मन्त्रहरुको रचना पनि मातृकाक्षरबाटै सम्भव हुने हुँदा मातृकास्वरुप मन्त्रमय देखा पदर्छन् । ५० पृथक् पृथक् वर्णका शक्तिरुप पृथक् पृथक् मातृकारुप विकसित हुने क्रममा सप्तवर्ग (अ,क,च,ट,त,प,य), अष्टवर्ग (अ,क,च,ट,त,प,य,श) र नववर्ग (अ,क,च,ट,त,प,य,श,क्ष) आदि प्रचलित हुँदै आए। शाक्त परम्परामा सृष्टि, शक्ति एवं सत्ताको मालिक मातृशक्तिलाई मानिएको छ। मातृशक्तिको अत्यधिक प्रचारले महाभारतीय पुराणकालदेखि नै लोकप्रियता पाउँदै आएको (*ब्राह्मी, माहेश्वरी, कौमारी, वैष्णवी, वाराही, इन्द्रायणी र चामुण्डा*) 'सप्तमातृका' गणमा महालक्ष्मीको प्रतिष्ठापनले 'अष्टमातृका'को भेद पाउँछौं । नवदुर्गाको विशिष्ट रुप महिषमर्दिनी वा भगवती हो। तर 'अष्टमातृका' गणमा त्रिपुरासुन्दरीको संलग्नताले नवदुर्गा गणको प्रसिद्धि भएको छ। यी मातृका स्वरुपलाई नवदुर्गाको विशिष्टता दिनु भक्तपुरबासीको मौलिकता हो ।

मातृका भावलाई मान्यता दिंदै पछिल्लो समयमा 'अष्टमातृका'लाई मानिआएको खड्गाकारमा स्थापित काठमाडौं शहरको सुरक्षार्थ आठ अजीमाहरु, चक्राकार

१. ब्रह्मायणी, २. माहेश्वरी, ३. कौमारी, ४. वैष्णवी, ५. वाराही, ६. इन्द्रायणी, ७. महाकाली, ८. महालक्ष्मी, ९. त्रिपुरासुन्दरी ।

**भक्तपुरको मूल नगरबस्ती**

आकृतिमा निर्मित ललितपुरको सुरक्षार्थ दशमहाविद्या प्रतिष्ठापित गरिएजस्तै राजा आनन्ददेवले यन्त्राकार रुपमा भक्तपुर बसालिसकेपछि एक रात नवदुर्गा भवानीबाट पाएको आदेशानुसार देश रक्षाकै लागि यथास्थानमा नवदुर्गा गण (प्रतिमा) स्थापना गरिदिए । यहाँ सुरक्षाको व्याख्या सदाकाल शत्रु, दैवी विपत्ति आदि अनेक अनिष्टकारी तत्त्वबाट रक्षा भई सुख, शान्ति एवं समृद्धि प्राप्ति रहेको छ । भक्तपुरको मूल नगरबस्तीको बाह्य घेराका आठ स्थानहरुमा अष्टमातृका'का आठ शक्तिपीठहरु (आकृति गुप्त पारिएका प्रस्तरहरु) तथा नगरबस्तीभित्रका घेरामा आठवटा देवगृह वा मन्दिर (द्यो: छेँ) पर्छन्, मध्यभागमा पीठ र देवगृहसहित (आकृत अनाकृत) त्रिपुरासुन्दरी विराजमान छिन् । नगरबस्तीको यो तान्त्रिक स्थिति र स्वरुप तत्कालीन परिस्थितिमा सांग्रामिक-सुरक्षा कवचको रुपमा सुरक्षाहेतु तान्त्रिकरुपमा स्थापित भएको हो । यसैकारण अहिलेसम्म भक्तपुरबासीहरु यस नगरलाई ' नवदुर्गा भवानीले सदाकाल रक्षा गरिरहेको देश' भनेर गौरव गर्छन् ।

भक्तपुरमा नवदुर्गाको पीठ, देवगृह वा मन्दिर मात्र नभई जीवित देवीहरुको अस्तित्वले समेत लोकप्रियता पाएको छ । भुवन मल्लको राज्यकालमा वि.सं. १५७० तिर भक्तपुर राज्यमा अनिकाल परेको हुँदा दुर्भिक्ष नाश पारी सहकाल ल्याउन तन्त्रप्रधान नवदुर्गा गण नाच प्रारम्भ गरेका थिए । देवीदेवताको मूर्तिमा जीवन्यास विधिले देवत्व प्रतिष्ठापन (प्राण प्रतिष्ठापन) गरिएपछि मात्र सजीव देवता ठहरिन्छ । माटो, काठ, ढुङ्गा, धातुका मूर्तिहरुमा त जीवन्यास गरी देवता चढाउन सकिन्छ भने प्रत्यक्षत: मानिसमा नै देवता चढाउने प्रयोगात्मक पद्धतिको शुरुआत तात्कालिक सिद्धहरुले गरे । मानिसमै चढाएर देव-प्रतिनिधिको रुपमा मान्यता पाएमा अद्यावधिक जीवित देवताहरुलाई सम्बद्ध विशेषताको आधारमा श्री कुमारी, गणेश, भैरवलाई *स्थायीरुपमा* नै जीवित देवता, नुवाकोटका भैरव, भैरवी, कर्णालीका मष्टा भवानी आदिलाई *स्थानीय देवदेवी (प्रतिनिधि स्वरुप)* तथा मनमैजु, रुद्रायणी (शिकालीदेवी), हरिसिद्धि, पचली भैरव, कार्तिक नृत्य (ललितपुर) र नवदुर्गालाई *अस्थायीरुपका जीवित देवता*को कोटिमा राख्न सकिन्छ ।

तेह्रौँ शताब्दीतिर अमूर्त साधारण ढुङ्गाका मूर्ति पीठस्वरुप र देवगृहमा प्रतिस्थापित नवदुर्गा सोह्रौँ शताब्दीको अन्ततिर आइपुग्दा तन्त्रप्रधान नाचको माध्यमबाट जीवित देवीको रुपमा लौकिक जीवनमा धार्मिक-दर्शनीय हुन पुग्यो । मूलनगरवस्तीको पूर्वी खण्डस्थित *ग: छेँ* टोलमा नेवारी शैलीमा तीनतल्ले एकछाने र तीन गजुरयुक्त पूर्वाभिमुख मन्दिर नवदुर्गा *द्यो: छेँ* (जीवित देवीहरुको देवगृह) को रुपमा प्रसिद्ध रहिआएको छ ।

भक्तपुरको नवदुर्गा गाथा संक्षिप्तमा बुझ्न श्रावण कृष्णचतुर्दशी/गथांमुग चह्रे (घण्टाकर्ण) देखि आषाढ कृष्णाष्टमी (भलभल अष्टमी) अवधिका वर्ष-क्रियाको जानकारी राख्नु मौलिक संस्कृतिसँग परिचित हुनु हो । वर्ष-क्रियामा सहभागी हुने सात जाति (प्रजापति-कुम्हाल- मुकुण्डो बनाउने, चित्रकार-पुं- मुकुण्डो चित्रण गर्ने, गाथा-वनमाला- मुकुण्डोधारी-नवदुर्गा नाचमा सरीक हुने, कर्माचार्य-आचाजु-तान्त्रिक विधि विधान संचालन गर्ने, जोशी- कर्मकाण्ड साइत जुराइदिने, राजोपाध्याय- दश कर्म विधान आदि सम्पन्न गर्ने र खड्गी बाजा बजाई प्रचार प्रसार गर्ने) को समूह रहेको छ । जन्म, बाल्यकाल (श्रावण कृष्णचतुर्दशी देखि कार्तिक कृष्ण प्रतिपदा) मा १४ व्यवहार, यौवनकाल (पौष कृष्ण चतुर्दशीदेखि आषाढ कृष्ण सप्तमी) मा ७ वटा क्रिया, बुढेसकालदेखि मृत्युपर्यन्त (भलभल अष्टमी) ६ विधिहरु कार्यान्वयन हुन्छन् । यी सबै क्रियाहरु पूर्ण तान्त्रिक विधि व्यवहारमा सम्पन्न हुन्छन् । शारदीय नवरात्रको बाल्यकालावधिमा दशकर्म विधानसहित सिद्धि प्राप्त गर्ने विविध अनुष्ठानहरु सम्पन्न हुन्छन् ।

बस्ती बाहिरका भूतहरुलाई तन्त्रद्वारा आवाहन गरी खेतीपाती रोपाईंको काम (नेवारीमा 'सिन्हां ज्या') सकेर, गथामुग: चह्रे (गठे मंगल, घण्टाकर्ण चतुर्दशी) का दिन तिनीहरुलाई बिदाइस्वरुप मन्छ्याई स्वच्छ हुने तथा सिद्धि प्राप्त गर्ने दिन भएकोले नवदुर्गा नाचको मुकुण्डो बनाउन गथामुग: चह्रेका दिन महादेवको मुकुण्डो सिर्जना गर्न चाहिने माटो धार्मिक विधिअनुसार भक्तपुर तालाक्वका प्रजापतिहरुले उपलब्ध गराउँछन् । बाँकी भएको द्य:चा (देवता माटो) बाट नवदुर्गा गणका सम्पूर्ण मुकुण्डोहरु सिर्जनाको कार्य

घटस्थापनासम्ममा पूर्ण हुन्छ । आश्विन शुक्ल नवमीको राति ब्रह्मायणी पीठस्थित घाटमा ती मुकुण्डोहरुमा मातृका गण जगाउन तान्त्रिक पूजा हुन्छ । त्यो रात घाटमा लाश जलाउन निषेध हुन्छ । दशमीका दिन मुकुण्डोहरु भक्तपुर तलेजुमा लगिन्छ । प्रजापतिहरुलाई नवदुर्गाले गुरु मान्यताले सम्मानस्वरुप विशेष बिमिरो चढाउने गरिन्छ । नवदुर्गाले मान्नुपर्ने हुनाले प्रजापतिहरुले आफ्नो टोलमा नवदुर्गा गणलाई आमन्त्रण गरी पूजा गर्दैनन् । मुकुण्डोको ढाँचा तयार भएपछि चित्रकारहरुले मातृकानुरुप मुहार लेपन गर्छन् र दृष्टि चित्रणपछि मुकुण्डो पूर्ण बन्दछ । चित्रकारहरु मुकुण्डोको आँखासँग आफ्नो आँखा नजुध्ने गरी मुकुण्डोको छड्के बसेर मात्र दृष्टि हाल्ने भनी आँखाका नानीहरु बनाउने गर्छन् । नाचमा पनि मुकुण्डोको आँखासँग आफ्नो आँखा कहिल्यै जुधाउन हुँदैन भन्ने मान्यताको अवहेलना गरे तत्काल मृत्यु हुन्छ भनिन्छ ।

तान्त्रिक देवीका आ-आफ्नै विशेष यन्त्र हुन्छन् । तान्त्रिक पूजामा यन्त्रमाथि सम्बद्ध देवदेवीलाई प्रतिस्थापित गरेर मात्र पूजा, अनुष्ठान गर्नुपर्ने परम्परा र मान्यता रहँदै आएको परिप्रेक्षमा नवदुर्गा गणका प्रत्येक मातृकाको मुकुण्डो लगाउने पात्रले सम्बद्ध पीठमा यन्त्र स्थापना गरी पूजा अनुष्ठान गर्दै आएको हुनुपर्छ । त्यसरी नै नवदुर्गा गणको नाचमा सम्बद्ध मातृकाको यन्त्र आर्विभाव हुने गरी तान्त्रिक नाच प्रस्तुत गर्नुपर्ने यथार्थ रहेको छ ।

नवमीको दिन नवौं मातृका त्रिपुरासुन्दरी सिद्ध भई नवदुर्गा भवानी पूर्ण भई महिषासुर वध गर्ने धार्मिक लोक मान्यतानुरुप देवगृहभित्र पाली मत्ता बनाइएको राँगोलाई महिषासुरको प्रतीक मानेर विधिवत् पूजा गरी खुट्टामा बाँधेर ब्रह्मायणी पीठमा पुऱ्याइन्छ । यसरी पीठस्थानमा पुऱ्याइएको राँगो राति भोगबलि दिई कंकाल मात्र बाँकी रहन्छ । राति भोगबलि दिँदा राँगाको 'हिं कोंचा' (रगत राख्ने माटाको भाँडा) मा जम्मा पारेको रगत ८ दिनपश्चात् प्रतिपदाको रात नवदुर्गा द्यो: छेँभित्रको चोकमा तान्त्रिक विधिपूर्वक नवदुर्गा गणले पिएपछि प्रफुल्ल मुद्रामा नाच प्रस्तुत गर्छन् ।

'धिं ... ताल्ल !!! खिं ता: र कहाँ तीन प्रकारका बाजाहरुको तालबाट निस्कने परम्परागत प्रसिद्ध बोल नवदुर्गा गणनाचकै पर्यायलङ्काररुपमा स्मरणीय हुन्छ । बाजाको ध्वनिले नर्तकलाई संगीतमय ताल मात्र दिने नभई दुष्टात्माहरुको कारण भोग्नु परेका दु:खकष्टहरु निवारण गर्ने समेत विश्वास गरिन्छ ।

## विभिन्न पीठहरू र प्रार्थनाश्लोक

भक्तहरुको शहर भक्तपुरमा अवस्थित अति रमणीय निर्मल नवदुर्गा पीठहरुको प्राङ्गणका पाटी पौवाको दलानको शिरोभागमा सम्बन्धित देवीका प्रार्थना श्लोकहरु अङ्कित गरिएका छन् । गत भाद्र महिनामा पीठहरुको अवलोकन गर्दा वर्षाले सबै पीठ प्राङ्गणहरु धोई पखाली सफा देखिन्थ्यो । शहर नै सफा राख्न जागरुक देखिएका भक्तपुरबासीले पीठ प्राङ्गण सफा राख्ने उत्साह देख्दा ईर्ष्या नै लाग्दोरहेछ । कौमारी, महाकाली, ब्रह्मायणी, माहेश्वरी पीठहरु त रुखहरुको झुण्ड, बोटबिरुवा बुट्यानसहित सानो थुम्कोमा रहेकोले अझ चित्ताकर्षक नै हुन्छ । सम्पूर्ण पीठ मन्दिरहरु गर्भगृहबिना खुल्ला छन् । मन्दिर र द्यो: छेँहरुको मूल ढोकामा रहेको तोरणमा चिरपरिचित महिषमर्दिनी भगवतीको मूर्ति कुँदिएका छन् । वाराही द्यो: छेँको तोरणमा मूल देवीसहित अन्य सात देवीहरुको मूर्ति महिषमर्दिनी भगवतीको स्वरुपमै कुँदिएका छन् । नेपाली मन्दिर संहितानुसार तोरणमा कुँदिएका मूर्तिले गर्भगृहमा स्थापित देवीदेवताको ज्ञान दिलाउने जानकारी जनसाधारणमा रहेको छ । विभिन्न पीठहरुका प्रार्थना श्लोक निम्न रहेका छन्-

**श्री ब्रह्मायणी पीठ–** अक्षसूत्र कमण्डलुधरा श्वेताम्वररुप स्वरूपिणी हंसयुक्त विमानस्थे जय श्री ब्रह्मायणी देवी नमोस्तु ते । **श्री माहेश्वरी पीठ–** नागहार अर्धचन्द्र विभूषणा त्रिशूलवर धारिणी । महावृषवाहिनी जय श्री माहेश्वरी देवी नमोस्तु ते । **श्री कौमारी पीठ–** सिद्धिपात्र, महाशक्तिभरा, रक्तवर्ण चतुर्भुजा रूपिणी । मयूरवरवाहिनी, जय श्री कौमारी देवी नमोस्तु ते ॥ **श्री भद्रकाली पीठ–** ॐ जयन्ती मंगलाकाली भद्रकाली कपालिनी दुर्गा क्षमा शिवाधात्री स्वाहा स्वधा नमोस्तुते । शङ्खचक्र गदा, धनुषबाण भरा, नीलाम्बर स्वरूपिणी । गरुडवाहिनी जय श्री वैष्णवीदेवी नमोस्तु ते ॥ **श्री वाराहीदेवी पीठ–** जय श्री वाराही ! सर्वसंकट विनाशिनी महिषवर वाहिनी । खड्ग चन्द्र धरा वृद्धमाता महावला ॥ वराहरुप स्वरूपिणी देहि मे परम सुखम् । जय श्री वाराहीदेवी नमस्तस्यै नमो नम: ॥ **श्री इन्द्रायणी पीठ–** सहस्रनयनां वज्रभरां ऐन्द्रि पीताम्बरारुप स्वरूपिणी । ऐरावत गजवाहिनी, जय श्री इन्द्रायणीदेवी नमस्तुते ॥ **श्री महाकाली पीठ–** जय त्वं देवी ! श्री चामुण्डे जय भूतप्रेतार्दिहारिणी । जय सर्व मंगल माङ्गल्ये जय महाकाली नमोस्तु ते । **श्री महालक्ष्मी पीठ–** दु:ख दारिद्र्य हरे देवी सर्वऐश्वर्यवरदायिनी । सिद्धिबुद्धि प्रदे देवीश्री महालक्ष्मी नमोस्तु ते । **श्री त्रिपुरसुन्दरी पीठ–** हे देवी ! देहि सौभाग्य आरोग्यै देहि, देहि मे परम सुखम् । सर्वसंकट विनाशिनी श्री त्रिपुरसुन्दरी देव्यै नमो नम: ।

**भक्तपुरको वाराही पीठ**

तान्त्रिक मतमा वाद्यध्वनिले जनजीवनमा शान्ति, सौभाग्य र सुख प्राप्त हुने भनिन्छ । त्यसैले यो नाच भक्तपुरका प्रत्येक टोलहरुका साथै बनेपा, नाला, पनौति, धुलिखेल, श्रीखण्डपुर, चौकोट, हाँडीगाउँ र देवपाटनमा समेत नचाइन्छ । नवदुर्गा नाचका सिफो द्यः (महालक्ष्मी), कालभैरव, महाकाली, वाराही, ब्रह्मायणी, माहेश्वरी, कौमारी, वैष्णवी, इन्द्रायणी, गणेश, महादेव, श्वेतभैरव, सिम्ब (सिंहिनी), दुम्ब (ब्याघ्रिनी) तथा सिं बाजा, तः बाजा, कायँ बाजा, महापात्र, नर्की गरी १९ गणहरुको परिवार छन् । नाचमा महालक्ष्मी र त्रिपुरासुन्दरी सहभागी हुँदैनन् भने अन्य सात मातृकाहरुसहित कालभैरव, गणेश, महादेव, श्वेतभैरव, सिम्ब, दुम्बको मुकुण्डोका साथ नृत्य दर्शनीय हुन्छ । महादेवको सानो मुकुण्डो गणेशले कम्मरमा बाँधेको हुन्छ । नवदुर्गा नाचको खिं बाजाको अग्रभागमा टाँसिएको धातुनिर्मित सानो मुखाकृति त्रिपुरासुन्दरी हुन् । यो बाजामा एक जोडी सिङ हालिएको हुन्छ । यस्ता बाजामा तान्त्रिक पूजाकर्म एवं भोगबलि चल्छ ।

नवदुर्गाको सक्रिय-सार्वजनिक प्रदर्शन दशैं (मोहनी) को दुई महिनापछिदेखि छ महिनासम्म चल्ने उत्कर्षकाल (यौवनकाल) मा मूलनगरको २१ टोल तथा नगरबाहिर १९ वटा गाउँ ठाउँमा गर्छन् । यस अवधिमा नेवार सम्प्रदायमा अनेक चाडपर्वहरु पर्दछन् । नवदुर्गा नाचको त्रिकोणरुपमा प्रस्तुत गर्ने नृत्यशैलीले तान्त्रिक परिप्रेक्ष्यमा नगरको वास्तुव्यूह संरचना (यन्त्राकार नगरको त्रिकोणमय-मूलस्थान परिसर), त्रिशक्ति स्वरुप (महाकाली, महालक्ष्मी, महासरस्वती), नवदुर्गा यन्त्रको अष्टकोणमा अवस्थित अष्टमातृकागणको अधिष्ठातृदेवी-त्रिपुर ासुन्दरी त्रिकोण दृष्टिगोचर हुन्छ । नवदुर्गागणले मूलबस्तीका टोलहरुको परिक्रमा गर्दा परम्परागत-निश्चित स्थानमा सिफो द्यः भनिने महालक्ष्मी सानो खटमा पश्चिमाभिमुख गरी राखी, नवदुर्गा गणको छोटो नाच प्रदर्शनपछि टोलबासीहरुको पूजा, मान ग्रहण गर्छन् । परिक्रमापथको निश्चित स्थानमा पूजा मान ग्रहण गरी मध्यरातमा शुरु हुने चापूजा (रात्रि-पूजा) मा सिफो द्यःको अगाडि कुमारीले यन्त्र आदर्शको आधारमा कामकलाको केही प्रभाव रहेको नृत्यका साथै भद्रकाली एवं अन्य मातृकाहरुले भैरवका साथ आ-आफ्नो यन्त्र आदर्शको आधारमा नाच्छन् ।

नवदुर्गा गणले निश्चित इलाकामा नाच-प्रदर्शनको लागि आएको सन्ध्यामा मु-बाहां (मुख्य बलि-सुंगुर) लिकेगु (लखेट्ने) विधान चलन छ । निर्धारित ११ इलाकाको खेतबारी वा खुला मैदानमा टोलबासीहरुले छोडेको सुँगुर लखेटेर समात्न नवदुर्गा गण आइपुग्छन् । भीडको उक्साइले उत्तेजित तुल्याइएका नवदुर्गा गणसमक्ष उम्कन नसक्ने गरी घेरिएको सुँगुरलाई भैरवले तत्कालै गमल्याइहाल्छन् र सिफो द्यः अगाडि लगी आफ्नो हातको नंग्राले सो जीवको कोखा कोट्याई, छाला च्याती हात घुसारेर मुटु बाहिर निकाली सिफो द्यःलाई चढाउँछन् । यसरी लखेट्दा मुकुण्डो लगाउँदैनन्, बोल्दैनन्, कुराकानी हुन नपाओस् र ध्यान भङ्ग नहोस् भन्ने अभिप्रायले रुमाल मुखमा च्यापेका हुन्छन् ।

स्थानीय लोकजीवनमा निकै प्रसिद्ध एवं नाचकै पर्यायलङ्काररुपमा प्रयुक्त हुँदै आएको नवदुर्गा नाच प्रदर्शनमा 'मान्छेरुपी' (ङा लाकेगु) माछा समात्न देखा परेका सिम्ब र दुम्बमध्ये दुम्बले यो क्रम जारी राख्छन् । माछा समात्न दुम्ब र श्वेतभैरवले प्रतीकात्मक जालीरुपी पुलु (मान्द्रो) भीड जम्मा भएको ठाउँतिर फाल्छन् । उत्तेजित भीडले जिस्क्याउँदै पक्रन चुनौती दिन्छ । त्यस्तै दुम्ब र श्वेतभैरवले भीडको चुनौती स्वीकार्दै इशाराले आफ्नो समीप आउन प्रतिचुनौती दिँदै हुत्तिँदै लखेट्दा कोही समातिएमा सिफो द्यः अगाडि लगी क्षमायाचना गर्न लगाई, दक्षिणा चढाउन लगाई मात्र मुक्त गरिन्छ । तन्त्रप्रधान धर्म संस्कृतिमा पुलु-भैरव मान्य तथा पूज्य छन् । यसैले मानिस मर्दा मान्द्रोमा बेह्रेर अन्तिम संस्कार गर्छन् । भक्तपुरको प्रसिद्ध भैरव मन्दिरको बाह्य भित्तामा झुण्ड्याइएको मसानभैरवको चित्र मान्द्रोमा लेखिएको छ । नवदुर्गा गणका दुम्ब र श्वेतभैरवले माछा मार्न फाल्ने मान्द्रो भैरवसँग सम्बद्ध रहेको पुष्टि हुन्छ ।

सम्बद्ध टोलमा 'ङा लाकेगु' नाचक्रम पूरा गरी सिफो द्यः अगाडि सबै गण समिल्लित सामूहिक नाच हुन्छ र टोलबासीहरुबाट पूजा मान ग्रहण गरी अन्तमा द्यः छेँमा फिर्ती सवारी चल्छ । नवदुर्गा गणको फिर्ती सवारीमा टोलबासीहरुले आदर सम्मान गरी द्यः छेँसम्म पुऱ्याउन जाने चलन छ । द्यः छेँ पुगेपछि महाकाली र वाराहीले द्यः छेँ अगाडिको चोक-बाटोमा नृत्य स्तुति गरेपछि अन्तमा सिफो द्यःको प्रवेश सँगसँगै नवदुर्गा गण तत्कालै आ-आफ्नो मूल-कक्षमा पुगिहाल्छन् ।

प्राकृतिक मृत्युको निकट-पूर्वकाल 'बुढेसकाल'मा सिद्धि हराउने, रिसाउने, कचकच गर्ने, पूर्व जीवनसँग सुरताल नमिल्ने, आफैमा बिर्सने र हराउने, अन्तिमकालको कल्पना गर्दै दिन गन्न थाल्ने, आफ्ना आफन्त, इष्टमित्र सबैसित भेट्ने, बिदावारी हुने इच्छा पलाउने आदि लोक जीवनले अनुभव गर्दै आएको परिप्रेक्ष्यमा नवदुर्गा गणको 'मृत्यु'पूर्वका क्रियाकलाप वा तन्त्रप्रधान विधान सदृश: प्रतीकात्मकरुपमा हाम्रो सामु 'बुढेसकाल' दृष्टिगोचर हुन आइपुग्छ । गुरुबाट प्राप्त गरेको तान्त्रिक सिद्धि पुन: गुरुलाई फिर्ता गर्ने विधानअनुरुप नवदुर्गा गणलाई 'शक्तिविहीन' तुल्याउने विधि गरिन्छ । केही क्षण अघि स्वतन्त्र र शक्तिसम्पन्न देखिने नवदुर्गा गणका स्वभाव र व्यवहार अचानक परिवर्तन भई, शिथिल तर उत्तेजित हुँदै पूजा अनुष्ठानमा व्यस्त आचाजुलाई सिध्याइहाल्ने नियतले पिठ्यूँपछाडि थिच्न पुग्छन् । नवदुर्गा गणले जतिसुकै तर्साएता पनि विचलित नभई निर्धक्क भएर डमरु बजाउँदै 'होस गरी सवारी होस् ...' भनी चेतावनी दिँदै गुह्य पूजा अनुष्ठानलाई निरन्तरता दिइरहेकै हुन्छन् । आचाजुको गुह्य कारवाहीका कारण शक्ति क्षीण भई कमजोर बनेका नवदुर्गा गणलाई आचाजुले तान्त्रिक पूजा अनुष्ठानद्वारा 'शक्तिविहीन' तुल्याई मन्त्रशक्तिले बाँधिएका नवदुर्गा गणलाई 'कलांलि' (पूजा सामाग्री राख्ने भाडा विशेष) मा राख्ने भावले गुह्य विधि पूरा गर्छन् ।

गुरुलाई 'मन्त्र दीक्षा' फिर्ता गरेको ९ दिनपछि भौतिक देह त्याग गर्नु ४ दिन पूर्व तलेजु आगममा गई मृत्यु अघिका अन्तिम भात-भोजन खुवाउने विधान (सी जा नकेगु) पूरा गरिन्छ । 'सी जा' खाई मरणासन्न अवस्थामा पुगेका नवदुर्गा गण द्य: छेँतर्फ फर्कँदा बजाइने बाजाको धुन सिद्धिविहीन वा निष्प्राण भावको सुनिन्छ । द्य: छेँ पुगेपछि अन्य गणहरुले महाकालीलाई जिस्काउन थालेपछि अति उग्र स्वभावकी महाकाली भयानकरुपमा क्रोधित हुँदै आवेगमा जोडका साथ देवगृहको मूलद्वार खोली बाहिरिन्छिन् । 'मृत्यु'लाई जीवले मात्र नभएर जगत्का रक्षक देवताले समेत असहजरुपमा स्वीकार गर्दै भगस्थी (आषाढ कृष्ण अष्टमी/भलभल अष्टमी) को रातमा नवदुर्गा गणले 'मृत्यु'लाई वरण गर्छन् । प्राकृतिक रुपले रन्थनिएका नवदुर्गा गण संस्कारगत अन्त्यका क्रममा ढुनमुनिँदै सुमाह्लीटोलमा आई १३ वटै मुकुण्डोहरु थुपार्छन् । सम्बद्ध वनमालाहरुले गुह्य कुरा प्रकाशमा नल्याउन शपथ लिई च्यामसिंहढोकातर्फ लाग्छन् । च्यामसिंह नपुग्दै सबै वनमालाहरुले आ-आफ्ना आभूषणहरु उतार्छन् र १३ वटै मुकुण्डोलाई सेतो कपडाले ढाकी सम्बद्ध वनमालाहरुले मुकुण्डोहरु आ-आफ्नो काँधमा बोकी, मुखमा रुमाल च्यापी, 'सि बाजं' (मरण धुन) बजाउन लगाई ब्रह्मायणी पीठको मसानघाटमा दाहसंस्कार कर्मका लागि चितामा राखेको मुकुण्डोहरुमा 'काल भैरव' हुने वनमालाले दागबत्ती दिन्छन् । मुकुण्डो जलाइसकेपछि खोलामा भस्म प्रवाह (नवदुर्गा गण जलप्रवेश) गरी स्नान शुद्धि गरी परालको आगो तापेर फर्कन्छन् । त्यसपछि कृषक जनजीवनमा नवदृर्गा भवानीको स्मरण गर्दै अष्टमातृका/नवदुर्गाको लोकलयमा गीत गाउँदै वर्षभरिलाई पुग्ने अन्न उत्पादनको आकांक्षा लिई रोपाइँ कार्यमा जुटिसकेका हुन्छन् । समयचक्रमा फेरि 'गथांमुग चह्रे' आइपुग्छ, 'सिन्हांज्या' औपचारिकरुपमा सकिन्छ अनि घुमीफिरी 'मर्त्यलोक'मा नयाँ नवदुर्गा गण लोकको रक्षा गर्न पुन: जन्मन्छन् ।

नवदुर्गा गणको जलप्रवेशपछि असुरक्षित ठान्छन् भने अर्कोतिर जलगमनमा लीन भएका अदृश्य नवदुर्गा गणबाट जलवृष्टिको सहयोगले अपेक्षित बाली उत्पादन हुने जनविश्वास छ । नवदुर्गा गणले लोकजीवनमा रोमाञ्चक एवं भयमिश्रित ढङ्गबाट अविस्मरणीय प्रभाव पार्ने देवताको रुपमा विशेष श्रद्धा एवं ख्याति पाएको छ । टोल वा प्रदेशका कुनै घरमा नवदुर्गा गण वा गणनायक प्रवेश गर्दा घर परिवारमा भयमिश्रित श्रद्धा मनोवैज्ञानिक तवरले स्वत: बढ्छ अनि आफ्नो घरमा आएका देवतालाई सन्तुष्ट पारेर पठाउन सक्नु अहोभाग्य, प्रतिष्ठा एवं गौरव मान्दछन् । समाजकै एक अभिन्न सदस्यको रुपमा देखापर्ने नवदुर्गा गण र यसका विभिन्न क्रियाकलापहरुसित प्रत्यक्ष वा प्रकारान्तरमा जनजीवनका अनेक अविस्मरणीय अपत्यारिला घटनाहरु समावेशी हुँदै सत्यभन्दा पनि अधिक विश्वसनीय बनेर रोचक एवं रोमहर्ष-सत्यकथाकै रुपमा चलेको छ । जय गुरुदेव !

***सन्दर्भ ग्रन्थ***


*भक्तपुको नवदुर्गा गण- पुरुषोत्तम लोचन श्रेष्ठ (२०६०),*
*संस्कृतिभित्र... सुभाषराम प्रजापति (२०६३),*
*नेवा संस्कृतिया नख: चख: -सुरेन्द्रमान श्रेष्ठ (२०५७)*


महान् चाड बडादशैँको पावन अवसरमा बिहानैदेखि विभिन्न मठ मन्दिरहरुमा भक्तजनको भीड लाग्ने गर्दछ । नेवार सम्प्रदायले यसबेला नौ दिनसम्म नौवटा तीर्थमा विशेष मेला भर्ने गर्दछन् । काठमाडौँबासीले भने निम्न स्थानमा दर्शन गर्ने गर्दछन्– प्रतिपदामा शंकर तीर्थ शंखमूल, द्वितीयामा निर्मल तीर्थ शोभा भगवती, तृतीयामा पुण्य तीर्थ गोकर्ण, चतुर्थीमा कालमोचन थापाथली, पञ्चमीमा पञ्चनाली पचली, षष्ठीमा मनोहर तीर्थ टोखा, सप्तमीमा आर्यघाट पशुपति, अष्टमीमा चिंतामणि तीर्थ टेकु दोभान, नवमीमा भवानी तीर्थ कङ्केश्वरी, दशमीमा शान्त तीर्थ गुह्येश्वरी ।

# दुर्गा सप्तशतीमा के छ ?

**देवि प्रपन्नार्तिहरे प्रसीद**
**प्रसीद मातर्जगतोऽखिलस्य ।**
**प्रसीद विश्वेश्वरी पाहि विश्वं**
**त्वमीश्वरी देवि चराचरस्य ॥**

मार्कण्डेयपुराणमा सावर्णिक मन्वन्तरको कथाअन्तर्गत वर्णित देवीमाहात्म्य नै दुर्गा सप्तशतीको रुपमा विख्यात छ । तीन चरित्र, तेह्र अध्याय र सात सय श्लोकमा ऋषि मार्कण्डेयद्वारा लिपिबद्ध यो रचनाको पाठ विशेषत: घटस्थापनादेखि नवरात्रिभर गर्ने गरिन्छ। यसको हरेक श्लोक स्वयंमा मन्त्रमय छ । विभिन्न दीक्षा संस्कारका साथ दुर्गा सप्तशतीको पाठ गर्ने परम्परा पहिले रहे पनि हालसम्म आइपुग्दा केवल पाठमा मात्र सीमित हुन पुगेको छ। यद्यपि यसको पाठबाट मात्र पनि हामीले यस रचनाको दिव्यतालाई स्वयं अनुभव गर्न सक्दछौं। स्थानविशेष, अवसर एवं विभिन्न तन्त्रअनुसार यसको पाठविधिमा विविधता रहे पनि सामान्य पाठकको लागि निम्नानुसारको संक्षिप्त विधि उचित हुन सक्ला– आचमन, संकल्प, पुस्तक पूजा, शापोद्धार एवं उत्कीलन अथवा शापविमोचन, ध्यान तथा पूजनपश्चात् छ अंगसहित सप्तशतीको पाठ । कवच, अर्गला तथा कीलक एवं प्रथम, मध्यम र उत्तर तीन चरित्र गरी दुर्गा सप्तशतीका जम्मा छ अंग मानिएको छ। यसबाहेक मूल पाठको प्रारम्भ र अन्त्यमा न्यास ध्यानसहित नवार्ण मन्त्र जप एवं रात्रिसूक्त तथा देवीसूक्तको पाठ पनि महत्त्वपूर्ण मानिएको छ भने सिद्धकुञ्जिकास्तोत्रको पाठबाट दुर्गा सप्तशतीको पाठ सफल हुने मान्यता रहेको छ । साथै विशेष परिस्थितिमा अथवा विशेष कार्य सिद्धिको लागि विभिन्न सिद्ध मन्त्रहरुबाट सम्पुट गरेर पनि यसको पाठ गर्न सकिन्छ । नवरात्रिबाहेक अन्य समयमा पाठ गर्नुपर्दा अष्टमी, नवमी एवं चतुर्दशी तिथिलाई उपयुक्त मानिन्छ । यदि एकै दिनमा दुर्गा सप्तशतीको पूर्ण पाठ गर्न सम्भव नभएमा पहिलो दिन मध्यम चरित्र अनि दोस्रो दिन प्रथम र उत्तर चरित्र पाठ गर्ने विधान छ। यसो गर्न पनि नसकेमा पहिलो दिनदेखि क्रमश: एक, दुई, एक, चार, दुई, एक र दुई गरी जम्मा तेह्र अध्यायको क्रमश: पाठ गरी सात दिनमा पनि पाठ गर्न सकिन्छ ।

दुर्गा सप्तशतीका तीन चरित्रहरुमा देवीका रुपहरुको सविस्तार व्याख्यासहित उहाँको महिमा गाइएको छ जसको संक्षिप्त कथावस्तु निम्नानुसार छ–

**प्रथम चरित्र–**

आफ्नै राज्यबाट भागेर आएका सुरथ नामका राजा र घरबाट निकालिएका समाधि नामका वैश्यलाई मेधा ऋषिले उपदेश दिन आरम्भ गर्नुहुन्छ जसमा सप्तशतीको सम्पूर्ण कथा वर्णित छ। कल्पको अन्त्यमा शेषशय्यामाथि योगनिद्रामा निमग्न भगवान् विष्णुको कानेगुजीबाट मधु र कैटभ नाम गरेका दुई असुर उत्पन्न भए । तिनीहरु विष्णुको नाभिकमलमा स्थित ब्रह्मालाई मार्न तयार भए। तब ब्रह्माले योगनिद्राको स्तुति गरी भगवान् विष्णुलाई जगाई ती दुवै असुरको विनाश गर्ने बुद्धि विष्णुलाई प्रदान गरिदिन प्रार्थना गर्नुभयो । तब भगवान् विष्णुको शरीरबाट उहाँ निस्केर ब्रह्माजीको अगाडि प्रकट हुनुभयो। भगवान् विष्णु योगनिद्राबाट उठेर ती असुरहरुसँग पाँच हजार वर्षसम्म युद्ध गर्नुभयो। महामायाको मोहमा परेर ती असुरहरुले वर माग्नको लागि भने । भगवान् विष्णुले तिमीहरुलाई मार्न पाऊँ भन्नुभयो । यसप्रकार भगवान् विष्णुले मधु कैटभको वध गर्नुभयो ।

## मध्यम चरित्र–

प्राचीनकालमा महिष नाम गरेको एउटा बलवान् असुरको जन्म भयो । उसले आफ्नो अतुल शक्तिको सहाराले इन्द्र, सूर्य, चन्द्र, यम, वरुण, अग्नि, वायु तथा अरु सबै देवताहरुलाई परास्त गरी स्वर्गबाट खेदेर स्वयं इन्द्र बन्यो । देवताहरु दु:ख पाउँदै मर्त्यलोकमा भट्किन लागे । अन्त्यमा उनीहरुले ब्रह्माजीको साथ भगवान् विष्णु र शिवसामु गएर आफ्नो कष्ट बताए । देवताहरुको कष्ट सुनेर हरिहरको मुखबाट एउटा महान् तेज प्रकट भयो । त्यसपछि ब्रह्मा, इन्द्र, सूर्य, चन्द्र, यम आदि देवताहरुको शरीरबाट पनि तेज निस्किन लाग्यो । सम्पूर्ण देवताहरुबाट निक्लेको तेजको समष्टिगत स्वरुप एउटी दिव्य नारीको रुपमा परिणत भयो । त्रिदेवलगायत अन्य देवताहरुले आ-आफ्ना अस्त्र तथा शस्त्र देवीलाई प्रदान गरे । त्यसपश्चात् देवीले भयंकर स्वरमा अट्टहास गर्नुभयो जसलाई सुनेर सम्पूर्ण असुर सेना लिई महिषासुर उक्त शब्दलाई पछ्याउन लाग्यो । देवी भएको ठाउँमा आइपुगेर उसले उहाँको उग्र स्वरुप देख्यो । त्यसपछि सबै असुरहरु देवीसँग युद्ध गर्न लागे । आफ्नो वाहन सिंहसहित भएर भगवतीले असुर सेनाको विनाश गर्न लाग्नुभयो । भगवतीको हातबाट चिक्षुर, चामर, उदग्र, कराल, उद्धत, वाष्कल, ताम्र, अन्धक, असिलोमा, उग्रास्य, उग्रवीर्य, महाहनु, विडाल, दुर्धर र दुर्मुख गरी असुर सेनाका पन्ध्र सेनानीहरु मारिए । तब महिषासुर स्वयं पहिले राँगो अनि सिंह, पुरुष, हात्ती हुँदै अन्त्यमा फेरि राँगो भएर भगवतीसँग युद्ध गर्न लाग्यो तर अन्त्यमा देवीको हातबाट मारियो ।

आफ्ना सम्पूर्ण शत्रुहरुको विनाश भएको देखेर देवताहरु आह्लादित हुँदै भगवतीको स्तुति गर्न लागे । देवीले पनि आपत विपतमा रक्षा गर्ने र यो चरित्रको पाठ गर्ने वा सुन्ने व्यक्तिलाई सुख र ऐश्वर्य प्राप्ति हुने वरदान दिनुभयो ।

**उत्तर चरित्र-**

पूर्वकालमा शुम्भ तथा निशुम्भ नाम गरेका दुई महापराक्रमी असुर थिए । तिनले इन्द्रको राज्य र यज्ञभाग खोसेर लिए । सूर्य, चन्द्र, कुबेर, यम, वरुण, पवन र अग्निको अधिकार पनि उनीहरु स्वयंले उपभोग गर्न लागे । देवताहरु भने दु:खी भएर मृत्युलोकमा आई करुण हृदयले भगवती विष्णुमायाको स्तुति गर्न लागे । त्यसैबेला भगवती पार्वती पनि गंगास्नानको उद्देश्यले त्यहीँ पुग्नुभयो । उहाँले देवताहरुलाई सोध्नुभयो- तपाईंहरु कसको स्तुति गर्दै हुनुहुन्छ ? तब उहाँकै शरीरकोशबाट शिवा देवी प्रकट भएर भन्नुभयो- शुम्भबाट तिरस्कृत र निशुम्भबाट पराजित यी देवताहरु मेरै स्तुति गर्दैछन् । पार्वतीको शरीरकोशबाट अम्बिकाको प्रादुर्भाव भएको हुनाले उहाँको नाम कौशिकी रह्यो । कौशिकी प्रकट भएपश्चात् पार्वतीको शरीर कालो रंगको भयो र कालिकादेवीको नामबाट उहाँ विख्यात हुनुभयो ।

तदन्तर जब परम सुन्दरी अम्बिकालाई शुम्भ निशुम्भका भृत्य (नोकर, मन्त्री) चण्ड मुण्डले देखे तब उनीहरुले शुम्भको अगाडि गएर देवीको सौन्दर्यको प्रशंसा गरे । शुम्भले पनि कुनै न कुनै उपाय लगाएर देवीलाई फकाई फुल्याई ल्याउन सुग्रीव नाम गरेको असुरलाई पठायो । सुग्रीवले भगवतीकहाँ पुगेर शुम्भ निशुम्भको ऐश्वर्य र शौर्यको प्रशंसा गर्दै उनीहरुमध्ये कुनै एकलाई रोजेर विवाह गर्न प्रस्ताव गर्‍यो । देवीले उत्तर दिनुभयो- जसले मलाई युद्धमा पराजित गरेर मेरो घमण्डलाई चकनाचूर गर्दछ, उसैसित मैले विवाह गर्ने प्रतिज्ञा गरेकी छु । सुग्रीवले शुम्भ निशुम्भकहाँ पुगेर सबै बेलीविस्तार लगायो । यस्तो कुरा सुनेर शुम्भ रिसायो र देवीलाई जगल्ट्याएर ल्याउन सेनापति धूम्रलोचनलाई पठायो । देवीले केवल हुंकारबाट नै त्यसलाई भस्म पारिदिनुभयो ।

त्यसपछि शुम्भले चतुरङ्गिणी सेनासहित चण्ड मुण्डलाई पठायो । उनीहरुले देवीलाई समात्ने प्रयत्न गर्न लागे । तब उहाँको निधारबाट भयानक काली देवी प्रकट हुनुभयो । उहाँले सम्पूर्ण असुर सेनाको विनाश गर्नुभयो अनि चण्ड मुण्डको शिर काटेर चण्डिकासामु पुगेर अट्टहास गरी कालिकादेवीले भन्नुभयो- मैले चण्ड मुण्ड नाम गरेका महापशु तपाईंलाई उपहारस्वरुप चढाएँ । अब शुम्भ र निशुम्भको वध तपाईं स्वयंले गर्नुहोस् । चण्डिका देवीले कालीलाई भन्नुभयो- चण्ड र मुण्डको वध गरेकी हुनाले संसारमा चामुण्डाको नामबाट तिम्रो ख्याति हुनेछ ।

चण्ड मुण्डको वधको खबर सुनेर शुम्भले सात सेनानायकहरुलाई पठायो । त्यसबेला ब्रह्मा, विष्णु, शिव, इन्द्र, वराह, नृसिंह र कार्तिकेय- यी सात प्रमुख देवका शक्तिहरु असुर सेनासँग युद्ध गर्न आइपुगे । फेरि चण्डिकाको शरीरबाट भयंकर शक्ति निक्लियो जुन नारी शरीरधारी थियो । चण्डिका-शक्तिले शुम्भ निशुम्भकहाँ निम्न सन्देश सुनाउन ईशान (भगवान् शिव) लाई पठाउनुभयो- यदि तिमीहरु आफ्नो कल्याण चाहन्छौ भने देवताहरुको लोक र यज्ञाधिकार फिर्ता गरेर पाताल जाओ । त्यसकारण चण्डिका-शक्तिको नाम शिवदूतीको रुपमा लोकमा विख्यात भयो ।

बलको घमण्डले चूर शुम्भ निशुम्भले देवीको सन्देशको अपहेलना गर्दै सेनासहित युद्धस्थलमा आइपुगे । भगवतीले देवशक्तिको सहाराले असुर सेनाको संहार गर्न शुरु गर्नुभयो । त्यसबेला महासुर रक्तबीज युद्धको लागि तत्पर भयो । उसको शरीरबाट रगतको एउटा थोपा भुइँमा झर्नासाथ उसैसमान शक्तिशाली अर्को महासुर उत्पन्न हुन्थ्यो । यसप्रकार उक्त महासुरबाट सम्पूर्ण जगत् नै व्याप्त हुन लाग्यो । अन्त्यमा चण्डिका देवीले चामुण्डालाई आज्ञा दिनुभयो- तिमी आफ्नो मुख फैलाऊ र रक्तबीजको रगतलाई भुइँमा खस्न नदेऊ, अनि यी असुरहरुलाई पनि चबाउँदै जाऊ । चामुण्डाले त्यसै गर्नुभयो र अन्त्यमा रक्तहीन बनेको रक्तबीजलाई विभिन्न शस्त्र अस्त्रले मार्नुभयो । त्यसपछि शुम्भ निशुम्भ दुवैसँग देवीले युद्ध गर्दै जानुभयो र त्यही क्रममा निशुम्भ मारियो । अनि शुम्भले क्रोधित भएर भन्यो- तँ अरुको बलमा घमण्ड गर्दैछेस् । भगवतीले उत्तर दिनुभयो- म त एक्लै छु, मबाहेक संसारमा अर्की कुनै स्त्री छैन, यी सबै मेरै विभूति हुन् । त्यसपछि ब्रह्माणीलगायत सबै देवीहरु अम्बिकाको शरीरमा लीन हुनुभयो । त्यसपछि देवी र शुम्भको अत्यन्त भयंकर युद्ध भयो र अन्त्यमा देवीको त्रिशूलबाट मारिएर शुम्भ पृथ्वीमा ढल्यो । सबै देवताहरुले भगवती कात्यायनीको स्तुति गरी तीनै लोकका समस्त बाधाहरु हटाउन तथा देवताका शत्रुहरुलाई सदैव नाश गरिदिन देवीसमक्ष प्रार्थना गरे । देवीले पनि विभिन्न समयमा यस धर्तीमा आउने दानवी बाधालाई विभिन्न अवतार लिएर शान्त गर्ने वरदान दिनुभयो । साथै देवीको माहात्म्यको पाठ गर्ने र श्रवण गर्नेहरुलाई पनि त्यसैअनुरुप वर दिने आश्वासन दिनुभयो ।

मेधा ऋषिबाट यो सम्पूर्ण कथा सुनेर राजा सुरथ र वैश्य समाधिले तीन वर्षसम्म कठोर रुपमा देवीको तपस्या गरे । चामुण्डा देवी प्रत्यक्ष भएर राजा सुरथलाई गुमेको राज्य फिर्ता हुने र अर्को जन्म सावर्णिक मनुको रुपमा हुने वर दिनुभयो भने वैश्य समाधिलाई मोक्षको लागि आवश्यक ज्ञान प्रदान गर्नुभयो । जय गुरुदेव !

## शुभकामना

विजयादशमी तथा शुभ दीपावली २०६६ को शुभ उपलक्ष्यमा सिद्धाश्रम शक्ति केन्द्रका समस्त कार्यकर्ता, साधक साधिका एवं शुभेच्छुकहरूको सुख शान्ति एवं समृद्धिका लागि हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

**सिद्धाश्रम शक्ति केन्द्र**

सम्पर्क कार्यालय पुरानो वानेश्वर
काठमाडौं

## शुभकामना

विजयादशमी तथा शुभ दीपावली २०६६ को शुभ उपलक्ष्यमा सिद्धाश्रम शक्ति केन्द्रका समस्त कार्यकर्ता, साधक साधिका एवं शुभेच्छुकहरुको सुख शान्ति एवं समृद्धिका लागि हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

**सिद्धाश्रम शक्ति केन्द्र**

प्रस्तावित सम्पर्क कार्यालय विशालनगर
काठमाडौं

## शुभकामना

परमपूज्य सद्‌गुरुदेवहरुको असीम कृपा, अनुकम्पा एवं आशीर्वाद स्वरुप यस म्हैपी आ.स.के. प्रस्तावित सम्पर्क कार्यालयको रुपमा विकसित भएकोमा परमपूज्य सद्‌गुरुदेवहरुको चरणकमलमा कोटि कोटि नमन अर्पण गर्दछौं । साथै विजयादशमी तथा शुभ दीपावली २०६६को पुनीत अवसरमा समस्त साधक साधिकाहरुमा गुरुकार्यको उत्साह एवं आध्यात्मिक आलोक अभिवृद्धि होस् भनी हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

**प्रस्तावित सम्पर्क कार्यालय म्हैपी**
परिवार

## शुभकामना

विजयादशमी तथा शुभ दीपावली २०६६ को पावन अवसरमा सम्पूर्ण नेपालीहरूमा जगत्‌जननी महाशक्ति नवदुर्गा भवानी तथा माता महालक्ष्मीको कृपा, आशीर्वाद प्राप्त होस् भनी हार्दिक मंगलमय शुभकामना व्यक्त गर्न चाहन्छु ।

**दुर्गाप्रसाद नेपाल**
क्याम्पस प्रमुख तथा
**ब्रिलियन्ट बहुमुखी क्याम्पस**
कुटुबहाल, चाबेल, काठमाडौं
फोन नं. ४४७८६८७, ४४८८७१४

## शुभकामना

**विजयादशमी तथा शुभ दीपावली २०६६ को शुभ उपलक्ष्यमा सम्पूर्ण देशवासीहरूको सुख शान्ति एवं समृद्धिका लागि हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।**

**दुवाकोट गा.वि.स. परिवार, भक्तपुर**

१. भौतिक निर्माणमा वातावरण संरक्षणलाई ध्यान दिऔं ।
२. स्वस्थ सामाजिक जीवन बिताउन अध्यात्मवादी व्यवहार गरौं ।
३. सार्वजनिक चासोका विषयहरूमा सक्रियताका साथ भाग लिऔं ।
४. सडक मापदण्ड पुरा गरेर मात्र घर टहरा निर्माण गरौं ।
५. व्यक्तिगत घटना दर्ता समयमा नै गरी जरिवानाबाट बचौं ।

## शुभकामना

**वचत गर्ने बानी**
**सुखी जिन्दगानी**

विजयादशमी तथा शुभ दीपावली २०६६ को पावन अवसरमा सम्पूर्ण देशवासीहरूमा हार्दिक मंगलमय शुभकामना व्यक्त गर्न चाहन्छु ।

**रत्न शर्मा (गौतम)**
अध्यक्ष
**मैतिदेवी महिला वचत तथा ऋण सहकारी संस्था लि.**

# दशैं आयो खाउँला पिउँला...

दशैं आयो, खाउँला पिउँला, कहाँ पाउँला, चोरी ल्याउँला, धत् पापी म त छुट्टै बसुँला । यी पंक्ति भन्दै दशैंताका स-साना बालबालिका रमाइरहेका हुन्छन् । खानेहरु खानकै धुनमा हुन्छन्, पिउनेहरु पिउनकै, तासजुवा खेल्नेहरु तासजुवाकै धुनमा हुन्छन्, पिङ खेल्नेहरु पिङ खेल्नकै धुनमा हुन्छन्, रमाइलो गर्नेहरु रमाइलोकै धुनमा हुन्छन् । सर्वसाधारणहरुले दशैंका लागि भनेर पहिल्यै पैसा जोहो गरिसकेका हुन्छन्, ऋण लिएर होस् वा अन्य तरीकाले । जागिरेहरुलाई त थप दशैं खर्चसमेत प्राप्त हुन्छ । त्यति मात्र कहाँ हो र ? चोर र डाँकाहरुले यसै समयमा चोरी र डकैती बढाएर समेत पैसा जोहो गर्छन्, वर्षमा सबभन्दा बढी चोरी र डकैतीका घटना घट्ने यही समयमा त हो नि !

नेपालीहरुको महान् चाड दशैं तपाईं हाम्रो घरआँगनमा भित्रिइसकेको छ भने दीपावली पनि भित्रिने तयारीमा छ। आफूभन्दा ठूलाबाट टीका थापी आशीर्वाद ग्रहण गर्ने, टाढा रहेका आफन्त, इष्टमित्र तथा साथीभाइ एकै ठाउँ जम्मा हुने, माया र स्नेह साटासाट गर्ने, नयाँ लुगा लाउने, भोजभतेर गर्ने, मनोरञ्जन गर्ने विशेषताका कारणले नै सबैलाई पर्खाइ छ दशैंको । हुन त कसैलाई दशैं कसैलाई दशा भनेझैं हुनेखानेलाई त बडो आतुरताका साथ प्रतीक्षा हुन्छ तर गरिबीसँग मित्रता गाँस्नेहरुका लागि भने यो पर्व दशा नै भएर आउँछ । नआओस् पनि कसरी ? भए पनि नभए पनि सबैलाई आफ्नो घरमा खसी ढाल्नुपर्ने हुन्छ, मासु खाने पर्ने हुन्छ, नयाँ लुगा किन्नुपर्ने हुन्छ, नयाँ सामानहरु जोड्नुपर्ने हुन्छ, तास, जुवा र रक्सीमा लठ्ठिनुपर्ने हुन्छ ।

दशैं नेपालीहरूको सर्वाधिक लोकप्रिय पर्व भएता पनि दुःखदायी कुरा यो छ कि हामीले नवरात्रिको साङ्केतिक अर्थलाई बुझ्न सकेका छैनौं । साधारण मनुष्य जीवनलाई विशिष्टतातर्फ लान, शक्ति आर्जन गर्न र मोक्ष प्राप्तिको मार्गतर्फ उन्मुख हुनको लागि एक स्वर्णिम अवसर बनेर प्रत्येक वर्ष दशैंको आगमन हुन्छ । नवरात्रिभरि विश्व ब्रह्माण्ड शक्तिको विशेष प्रवाहले आप्लावित भइरहेको हुन्छ र यो समयमा गरिएका साधनाहरू तीव्र फलदायी हुन्छन् । साधना गरेर शक्तिमय बन्दै अद्वितीयता प्राप्तिको लागि आएको यो विशेष सौभाग्यलाई हामीले खाने, लाउने, जुवा-तास खेल्ने आदि गरी मोजमस्ती गरेर मात्र बिताइरहेका छौं ।

दुर्गातंत्र, देवीपुराण, सूर्यपुराणजस्ता हिन्दु ग्रन्थहरूका अनुसार दशैं सत्य युगदेखि नै चलिआएको छ । देवासुर संग्राममा देवताहरूको हार र असुरहरूको जीत भइरहेको बेला देवताहरूले आश्विन शुक्ल प्रतिपदादेखि नवमीसम्म नवदुर्गाको उपासना गरेपछि दुर्गा प्रसन्न भइन् र देवताहरूको सहयोगका लागि रणभूमिमा पुगिन् । दशमीको दिन देवताहरूले आफ्नो गुमेको स्वर्ग फेरि पाए । यस उपलक्ष्यमा उनीहरूले दुर्गाको पूजा गरी टीकाटालो र भोज-भतेरको आयोजना गरे । पछि यो प्रथाको रूपमा विकसित हुँदै गयो र प्रतिवर्ष दशैं पर्व मनाउन थालियो । दशैं शब्द 'दशमी'को अपभ्रंश हुनुपर्दछ भन्ने अनुमान गर्न सकिन्छ । यस पर्वको बारेमा अर्को के अनुमान गर्न सकिन्छ भने दशैंमा आत्मशुद्धिको लागि दशै इन्द्रियहरूलाई संयममा राख्नुपर्ने सन्देश दिइएको हुनाले यस पर्वको नाम दशैं भएको हुन सक्दछ । द्वापर युगमा भगवान् श्रीरामले त्रिलोक विजयी राक्षसराज रावणलाई संहार गर्न जाँदा रणभूमिमा रावणलाई अजेय देखेर त्यहीं नौ दिनसम्म दुर्गाको उपासना गरी दशौं दिनमा दैवी शक्ति प्राप्त गरेर रावणलाई मार्न सक्षम भई भगवान् श्रीराम विजयी हुनु भएकोले यस पर्वलाई त्यसै विजयको संस्मरणस्वरूप 'शुभ विजयादशमी' पनि भनिन्छ ।

नवदुर्गा माताको कृपा प्राप्त गर्न चाहनेहरु आश्विन शुक्ल प्रतिपदाको दिन घरको कोठा वा बाहिरी मण्डपमा वैदिक वा तान्त्रिक विधिले घडालाई गाईको गोबरले सिङ्गारेर जमरा रोपी घटस्थापना गर्दछन् । त्यही घडामा भगवती दुर्गाको आवाहन गरिन्छ । त्यस घडामाथि इष्टदेवी, दुर्गा, कालीको मूर्ति भित्र्याइन्छ अनि अष्टमीमा राती नवदुर्गा स्थापना गरिन्छ र हात हतियारहरू धोइपखाली सफा गरेर पूजा गरिन्छ । यस रातलाई 'कालरात्रि' भनिन्छ भने नवमीमा दुर्गाको विभिन्न स्वरूपको

विशेष पूजन हुन्छ र दशमीको दिन पूजा समापन गरी मान्यजनहरूबाट दुर्गाको प्रसादस्वरूप टीका-जमरा थापी आशीर्वाद प्राप्त गर्ने परम्परा चलिआएको छ । विभिन्न समुदायहरुमा आ-आफ्नै किसिमले नवदुर्गामाताको उपासना गर्ने प्रचलन छ ।

दशैं मनाउने प्रचलनले जे-जसरी निरन्तरता पाएको भएता पनि यो एउटा शक्ति पर्व हो र यसअन्तर्गत पर्ने नवरात्रिको विशिष्ट महत्त्व हुन्छ। यही विशेष महत्त्वले गर्दा अन्य चाडपर्वहरू वर्षमा एकपटक मनाइन्छ भने नवरात्रिलाई वर्षमा चारपटक मनाइन्छ । शारदीय नवरात्रि (बडादशैं) र चैत नवरात्रि (चैतेदशैं) को जानकारी त सबैलाई नै छ तर माघ र आषाढ महिनामा पर्ने नवरात्रिप्रति सर्वसाधारणको अनभिज्ञता रहेको पाइन्छ । यी दुई नवरात्रिहरूलाई गोप्य नवरात्रिको रूपमा मनाइन्छ र शक्ति उपासकहरुका लागि यी गोप्य नवरात्रिको पनि विशेष महत्त्व हुन्छ ।

नवरात्रिको प्रत्येक दिनको आगमन एउट दिव्य सन्देशका साथ हुन्छ। प्रत्येक दिन दुर्गा माताको एउटा विशेष स्वरूपमा समर्पित भएको हुन्छ र नौ दिनहरूमा माताका नौवटा स्वरूपको आराधना गरिन्छ जसमा घटस्थापनामा शैलपुत्री, द्वितीयामा ब्रह्मचारिणी, तृतीयामा चन्द्रघण्टा, चतुर्थीमा कूष्माण्डा, पञ्चमीमा स्कन्दमाता, षष्ठीमा कात्यायनी, सप्तमीमा कालरात्रि, अष्टमीमा महागौरी, नवमीमा सिद्धिदात्री स्वरूपको पूजा, आराधना गरिन्छ । माताका यी नौ स्वरूपले क्रमिकरूपमा पशुवत् साधारण मनुष्य जीवनबाट माथि उठ्दै मोक्षको द्वारसम्म पुग्नको लागि प्रत्येक व्यक्तिलाई आह्वान गरिरहेका हुन्छन् ।

यस्तो गूढ सन्देश समाहित गरेको दशैं व्यक्ति-व्यक्तिबीचको होडबाजी एवं अनावश्यक खोक्रो आडम्बर

प्रदर्शन गर्ने एउटा विकृत पर्वको रूपमा विकसित भएको छ । आफूभित्रका कमी, कमजोरीहरू-काम, क्रोध, लोभ, मोह, ईर्ष्या आदिलाई बलिको रूपमा देवीको चरणमा सुम्पी स्वयंमाथि विजय प्राप्त गरेमा सारा संसारमाथि विजय पाइन्छ भन्ने शास्त्रगत सन्देशलाई आत्मसात् गर्न नसक्नेहरू निर्दोष प्राणीहरूको हत्या गरी पुरुषार्थ गरेकोमा गर्व गर्छन्। देवीको मूर्तिअगाडि गएर जनावरलाई छप्काएर रगतका धाराहरु चुहाउँदै देवीलाई चढाउने अन्धपरम्परा पनि चलिआएको छ जुन कुरा आफैंमा दुःखदायी छ । सारा संसारकी आमालाई उहाँकै एउटा सन्तानको निर्मम हत्या गरेर खुसी बनाउने दुस्साहस गर्नु मूर्खतासिवाय अरु केही होइन ।

हामीले अहिलेसम्म धेरै दशैंलाई मोजमस्तीका साथ बिताएका छौं तर अबका दिनमा दशैंको वास्तविक महत्त्व र अर्थलाई बुझेर पहिलेका दशैंभन्दा पृथक्रूपमा मनाऔं। नवरात्रिका प्रत्येक दिनमा मन्त्र जप, ध्यान, साधना, पूजन, स्तोत्र पाठ जे जसरी हुन्छ साधनामयरूपमा मनाउँदै जगज्जननी जगदम्बिकाको कृपा र आशीर्वाद पाउने यत्न गरौं, सम्पूर्ण बन्धुबान्धवसँग प्रेम र आत्मीयताको आदान-प्रदान गर्दै प्रेममय, आनन्दमय, अध्यात्ममय स्वर्णिम जीवनको शुरुआत गरौं र दशैंलाई शक्ति आर्जन गर्ने पर्वको रुपमा मनाऔं । जय गुरुदेव !

# कालीश्मशानालयवासिनीम्

विरंच्यादिदेवास्त्रयस्ते गुणास्त्रीम्,
समाराध्य कालीं प्रधाना बभूवुः।
अनादिं सुरादिं मखादिं भवादिं,
स्वरूपं त्वदीयं न विन्दन्ति देवाः।।१।।

जगन्मोहिनीयम् तु वाग्वादिनीयम्,
सुहृद्पोषिणी शत्रुसंहारणीयम्।
वचस्तम्भनीयम् किमुच्चाटनीयम्,
स्वरूपं त्वदीयं न विन्दन्ति देवाः।।२।।

इयं स्वर्गदात्री पुनः कल्पवल्ली,
मनोजास्तु कामान्यथार्थ प्रकुर्यात्।
तथा ते कृतार्था भवन्तीति नित्यं,
स्वरूपं त्वदीयं न विन्दन्ति देवाः।।३।।

सुरापानमत्ता सुभक्तानुरक्ता,
लसत्पूतचित्ते सदाविर्भवस्ते।
जपध्यान पूजासुधाधौतपंका,
स्वरूपं त्वदीयं न विन्दन्ति देवाः।।४।।

चिदानन्दकन्द हसन्मन्दमन्द,
शरच्चन्द्र कोटिप्रभापुञ्ज विम्बम्।
मुनीनां कवीनां हरि द्योतयन्तं,
स्वरूपं त्वदीयं न विन्दन्ति देवाः।।५।।

महामेघकाली सुरक्तापि शुभ्रा,
कदाचिद्विचित्रा कृतिर्योगमाया।
न बाला न वृद्धा न कामातुरापि,
स्वरूपं त्वदीयं न विन्दन्ति देवाः।।६।।

क्षमास्वापराधं महागुप्तभावं,
मया लोकमध्ये प्रकाशीकृतंयत्।
तवध्यान पूतेन चापल्यभावात्,
स्वरूपं त्वदीयं न विन्दन्ति देवाः।।७।।

यदि ध्यान युक्तं पठेद्यो मनुष्य
स्तदा सर्वलोके विशालो भवेच्च।
गृहे चाष्ट सिद्धिर्मृते चापि मुक्ति,
स्वरूपं त्वदीयं न विन्दन्ति देवाः।।८।।

माथि उल्लिखित यो दिव्य स्तोत्र माता कालीको आवाहन मन्त्र हो भने पनि फरक पर्दैन किनकि श्रेष्ठ साधकहरुले श्रद्धायुक्त भएर यस स्तोत्रको सस्वर पाठ गर्दा माता कालीको विम्बवत् वा साकार दर्शन पनि प्राप्त गरेका छन्। समान्यरुपमा पनि यसको पाठबाट सारा वातावरणमा अद्भुत चैतन्यता आउँदछ, उत्साहको वातावरण बन्दछ । प्रत्येक स्तोत्रले आफूभित्र केही न केही विशेषता लुकाएको हुन्छ र यो स्तोत्र पनि यति धेरै तीक्ष्ण प्रभावयुक्त छ कि यदि साधक यसलाई सिद्ध गरेर कुनै पनि उग्र साधनामा अथवा श्मशान साधनामा प्रवृत्त हुन्छ भने उसलाई सफलता मिल्दछ नै । माता कालीलाई त श्मशानालयवासिनीम् भनिएको छ र श्मशानकी अधिष्ठात्री देवीको उपासना गरेपश्चात् साधकलाई असाध्य किसिमका श्मशान साधना कुनै पनि बाँकी रहँदैन । केवल श्मशान साधनामा मात्र होइन जीवनको ती समस्त विपरीत परिस्थितिहरु जसले जीवनको जीवन्ततामा बाधा बनेर जीवनलाई श्मशानतुल्य, नीरस एवं निश्चेष्ट बनाएका छन्, तिनको निवारण पनि माता महाकालीको कृपाबाट नै सम्भव हुन्छ । स्तोत्र एकातर्फ मन्त्रस्वरुप हुन्छ भने अर्कोतर्फ यसमा प्रार्थना एवं याचनाको यस्तो मधुर स्वर मिलेको हुन्छ जसले सम्बन्धित देव वा देवीको भाव पक्षलाई स्पर्श गर्दछ । यही विशेषता यस स्तोत्रमा पनि समाहित छ ।

यस स्तोत्रलाई सिद्ध गर्न सरल साधना विधि पनि छ । कृष्णपक्षको कुनै पनि मंगलवार अथवा अष्टमीको रातबाट यस स्तोत्रको पाठ शुभारम्भ गरेर नित्य ५१ पाठ २१ दिनसम्म गर्नुपर्दछ । त्यस अवधिमा साधक ब्रह्मचर्यमा रहनुपर्दछ, यदि सम्भव छ भने एक समय मात्र सात्विक भोजन गर्ने तथा भूमिशयन गर्नुपर्दछ । जय गुरुदेव !

# दीपावलीमा गरौँ महालक्ष्मी पूजन

**पूजनको लागि आवश्यक सामग्रीहरू**

कुंकुम, रातो कपडा, पान, सुपारी, ल्वाङ, अलैँची, धूप, दीप, फलफूल, गंगाजल, नैवेद्य, वस्त्र, आभूषण, अबीर, सिन्दूर, बेसार, काँचो नरिवल (पानी भएको), फूल, माला, यज्ञोपवीत, पंचामृत, प्राण-प्रतिष्ठित महालक्ष्मी चित्र, महालक्ष्मी यंत्र ।

**विधि**

सबैभन्दा पहिले शुद्ध पवित्र भई माथि उल्लिखित सामग्रीहरू जम्मा गर्नुहोस् । त्यसपछि सायंकाल (साँझ) मा पूर्व वा उत्तरतर्फ फर्की पहेँलो आसनमा बस्नुहोस् । सम्भव भएसम्म परिवारका अन्य सदस्यहरूलाई पनि साथमा राख्नुहोस् । आफ्नो अगाडि पूजास्थल बनाई त्यसमा पहेँलो आसन ओछ्याएर एउटा थालीमा कुंकुमले स्वस्तिक चिह्न वा श्रीं बीज लेख्नुहोस् । त्यसमाथि महालक्ष्मी यंत्र स्थापित गरिदिनुहोस् र माता महालक्ष्मीको तस्वीर पनि अगाडि स्थापना गर्नुहोस् ।

**सबैभन्दा पहिला गुरू पूजन र गणपति पूजन सम्पन्न गर्नुहोस् ।**

त्यसपछि दाहिने हातमा जल लिएर संकल्प गर्नुहोस् । संकल्पमा मास (महिना), पक्ष, तिथि, आफ्नो नाम तथा गोत्र उच्चारण गरी म अखण्ड लक्ष्मी प्राप्तिहेतु महालक्ष्मी पूजन गर्दैछु भनी जल भूमिमा छोडिदिनुहोस् ।

**कलश स्थापना**

अब आफ्नो दाहिनेतर्फ अक्षताले अष्टदल वा स्वस्तिक चिह्न बनाएर जल भरिएको कलश स्थापित गर्नुहोस् । कलशमा सुपारी, अक्षता, दूबो, दक्षिणा, चन्दन र पुष्प चढाउनुहोस् । कलशलाई सवा मिटर रातो वस्त्रले बेरेर त्यसमाथि नरिवल राखिदिनुहोस् । त्यसपछि धूप, दीप, नैवेद्य आदि चढाएर वरुण देवताको साधारण पूजन गर्नुहोस् । यसपछि माता महालक्ष्मीको मुख्य पूजन आरम्भ गर्नुहोस् ।

**ध्यानम्**–कमलको फूलमा असीन माता महालक्ष्मीको ध्यान गर्नुहोस् ।

**पद्मासनां पद्मकरां पद्ममाला विभूषिताम्**
**क्षीर सागर संभूतां हेमवर्ण समप्रभाम् ।**
**क्षीर वर्णं श्वेत वस्त्रं दधानां हरिवल्लभाम्**
**भावेयं भक्तियोगेन भार्गवीं कमलां शुभाम् ।**
**ॐ श्री महालक्ष्म्यै नमः ध्यानं समर्पयामि ।**

**आवाहनम्**– माता महालक्ष्मीलाई आवाहन गर्नुहोस् ।

**सर्वमंगल मांगल्ये विष्णुवक्षः स्थलालये**
**आवाहयामि देवि ! त्वां क्षीर सागर सम्भवे**
**ॐ श्री महालक्ष्म्यै नमः आवाहनम् समर्पयामि ।**

**आसनम्**– आसनको लागि पुष्प चढाउनुहोस् ।

**सदा पद्मांक संस्थाने सर्वाधारे महेश्वरि**
**सर्वतत्त्वमयं दिव्यं आसनं प्रतिगृह्यताम्**
**ॐ श्री महालक्ष्म्यै नमः पादयोः पाद्यम् समर्पयामि ।**

**अर्घ्यम्**– अर्घ्य अर्पण गर्नुहोस् ।

**अघहीनं गृहाणेदम् अर्घ्यम् अष्टांग संयुतम्**
**अम्बाखिलानां जगतामम्बुजासन वन्दिते ।**
**ॐ श्री महालक्ष्म्यै नमः हस्तयोरर्घ्यं समर्पयामि ।**

**आचमनम्**– आचमनको लागि जल अर्पण गर्नुहोस् ।

**सर्वतीर्थ समानीतं सुगन्धिं निर्मलं जलम् ।**
**आचम्यताम् मया दत्तं गृहीत्त्वा परमेश्वरि ॥**
**ॐ श्री महालक्ष्म्यै नमः आचमनीयम् समर्पयामि ।**

**स्नानम्**– गंगाजलले स्नान गराउनुहोस् ।

**गंगासरस्वती रेवा पयोष्णि नर्मदाजलैः ।**
**स्नापितासि मया देवि ! तथा शान्तिं कुरुष्व मे ॥**
**ॐ श्री महालक्ष्म्यै नमः स्नानं समर्पयामि ।**

**पंचामृत स्नानम्**– पञ्चामृत (दूध, दही, घ्यू, मह, चिनी) ले स्नान गराउनुहोस् ।

**मध्वाज्यशर्करायुक्त दधिक्षीर समन्वितम्**
**पंचामृतं गृहाणेदं सर्वशक्तिसमन्विते ॥**
**ॐ श्री महालक्ष्म्यै नमः शुद्ध जल स्नानं समर्पयामि ।**
पुनः शुद्ध जलले स्नान गराउनुहोस् ।
**वस्त्रम्**– वस्त्र अर्पण गर्नुहोस् ।
**सर्वभूषादिके सौम्ये लोकलज्जा निवारणे ।**
**मयोपपादिते तुभ्यम् गृह्यताम् जगदम्बिके ॥**
**ॐ श्री महालक्ष्म्यै नमः वस्त्रोपवस्त्रं समर्पयामि ।**
**यज्ञोपवीतम्**– जनै अर्पण गर्नुहोस् ।
**उपवीतं गृहाणेदं उपमाशून्य वैभवे ।**
**उमाहेमवति प्रीत्या हेमसूत्र समन्वितम् ॥**
**ॐ श्री महालक्ष्म्यै नमः यज्ञोपवीतं समर्पयामि ।**
**आभूषणम्**– आभूषण अर्पण गर्नुहोस् ।
**मांगल्यमणिसंयुक्तं मुक्ताफल समन्वितम् ।**
**दत्तं मंगल सूत्रं ते गृहाणाम्ब ! शुभं कुरु ॥**
**ॐ श्री महालक्ष्म्यै नमः आभूषणं समर्पयामि ।**
**चन्दनम्**– चन्दन अर्पण गर्नुहोस् ।
**श्रीखण्डचन्दनं दिव्यं गन्धाढ्यं सुमनोहरम् ।**
**विलेपनं सुरश्रेष्ठि चन्दनं प्रतिगृह्यताम् ॥**
**ॐ श्री महालक्ष्म्यै नमः चन्दनं समर्पयामि ।**
**अक्षत्**– अक्षता अर्पण गर्नुहोस् ।
**अक्षतान् धवलान् देवि ! शालीयांस्तण्डुलान् शुभान् ।**
**हरिद्राकुंकुमोपेतान् गृहाणाम्ब ! कृपानिधे ॥**
**ॐ श्री महालक्ष्म्यै नमः अक्षतान् समर्पयामि ।**
**पुष्प**– फूल अर्पण गर्नुहोस् ।
**माल्यादीनि सुगन्धीनि मालत्यादीनि वै विभे ।**
**मयोपनीतानि पुष्पाणि गृहाण जगदम्बिके ॥**
**ॐ श्री महालक्ष्म्यै नमः पुष्पाणि समर्पयामि ।**
**सौभाग्य द्रव्य**– सौभाग्य अर्पण गर्नुहोस् ।
**कज्जलं चैव सिन्दूरं हरिद्राकुंकुमानि च ।**
**भक्त्याऽर्पितानि श्री मातः ! सौभाग्यानि च स्वीकुरु ॥**
**धूपम्**– धूप बालेर अर्पण गर्नुहोस् ।
**वनस्पति रसोद्भूतः गन्धाढ्यः सुमनोहरः ।**
**आघ्रेयः सर्वदेवानां धूपोऽयं प्रतिगृह्यताम् ॥**
**ॐ श्री महालक्ष्म्यै नमः धूपम् आघ्रापयामि ।**
**दीपम्**– दीयो बालेर माताको चरणमा देखाइदिनुहोस् ।
**साज्यं च वर्तिसंयुक्तम् वह्निना योजितम् मया**
**दीपं गृहाण देवेशि ! सर्वत्र तिमिरापहा ॥**
**ॐ श्री महालक्ष्म्यै नमः दीपं दर्शयामि समर्पयामि ।**
**नैवेद्यम्**– नैवेद्य एवं फलफूल अर्पण गर्नुहोस् ।
**ॐ महालक्ष्म्यै च विद्महे सर्वशक्त्यै च धीमहि तन्नो लक्ष्मीः प्रचोदयात् ।**
**शर्कराघृत संयुक्तं मधुरं स्वादुचोत्तमम् ।**
**उपहार समायुक्तं नैवेद्यम् प्रतिगृह्यताम् ॥**
**ॐ श्री महालक्ष्म्यै नमः नैवेद्यं निवेदयामि,**
**नाना ऋतुफलानि च समर्पयामि ।**
**आचमनम्**– पाँच आचमनी जल अर्पण गर्नुहोस् ।
**ॐ प्राणाय स्वाहा, ॐ अपानाय स्वाहा, ॐ व्यानाय स्वाहा, ॐ उदानाय स्वाहा, ॐ समानाय स्वाहा । ॐ श्री महालक्ष्म्यै नमः आचमनीयम् समर्पयामि ॥**
**ताम्बूल**– पान अर्पण गर्नुहोस् ।
**पूंगीफलं महद्दिव्यं नागवल्ली दलैर्युतम्**
**एलाचूर्णादि संयुक्तं ताम्बूलं प्रतिगृह्यताम् ।**
**ॐ श्री महालक्ष्म्यै नमः ताम्बूलं समर्पयामि ॥**
**नीराजन**– नीराजन गर्नुहोस् ।
**न तत्र सूर्यो भाति न चन्द्र तारकं नैता विद्युतो कुतो यमग्निः । समेन भान्तम् अनुभाति सर्वं तस्य भासा सर्वमिदं विभाति ॥**
**ॐ श्री महालक्ष्म्यै नमः नीराजनं समर्पयामि ।**
**जल आरती**– जलले आरती गर्नुहोस् ।
**ॐ द्यौः शान्तिरन्तरिक्ष (गूं) शान्तिः पृथिवी शान्तिरापः शान्तिरोषधयः शान्तिर्वनस्पतयः शान्तिर्विश्वेदेवाः शान्तिः ब्रह्म शान्तिः सर्व (गूं) शान्तिः शान्तिरेव शान्तिः सा मा शान्तिरेधि ।**
**प्रदक्षिणा**– माताको प्रदक्षिणा गर्नुहोस् ।
**सर्वमंगललाभाय सर्वपापनिवृत्तये ।**
**प्रदक्षिणां करोम्यम्ब ! प्रसीद परमेश्वरि ॥**
**ॐ श्री महालक्ष्म्यै नमः प्रदक्षिणां समर्पयामि ।**
**पुष्पाञ्जलि**– पुष्पाञ्जलि अर्पण गर्नुहोस् ।
**पुष्पाञ्जलिं गृहाणेमां परब्रह्मस्वरूपिणी ।**
**भक्त्या समर्पितं देवि ! प्रसन्ना भव सर्वदा ॥**
**ॐ श्री महालक्ष्म्यै नमः पुष्पाञ्जलिं समर्पयामि ।**
**क्षमा प्रार्थना**– हात जोडेर क्षमा प्रार्थना गर्नुहोस् ।
**आवाहनं न जानामि न जानामि विसर्जनम् ।**
**पूजां चैव न जानामि क्षमस्व परमेश्वरि ॥**
**मंत्र हीनं क्रिया हीनं भक्ति हीनं सुरेश्वरि ।**
**यत्पूजितं मया देवि परिपूर्णं तदस्तु मे ॥**
**ॐ तत् सत् ब्रह्मार्पणमस्तु । अनेन कृतेन पूजाराधन कर्मणा श्री महालक्ष्मी प्रीयताम् !**
दाहिने हातमा जल लिएर छोडिदिनुहोस् । फेरि सबै परिवार मिलेर भगवती लक्ष्मीलाई प्रणाम अर्पण गर्नुहोस् र प्रसाद ग्रहण गर्नुहोस् । जय गुरुदेव !

# ध्यान

ध्यान शब्द हामीले बारम्बार सुनिराखेको शब्द हो । यसको प्रयोग दैनिक जीवनको प्रत्येक क्रियाकलापमा गरिएको हुन्छ । बिहान उठेदेखि नसुतुन्जेल ध्यानलाई नै हामीले प्रयोग गरिराखेका हुन्छौं । ध्यान नदिइकन हामीले कुनै कार्य सम्पन्न गर्न नै सक्दैनौं । ध्यान नदिई न हिँड्न सक्छौं, न त खान सक्छौं, न पढ्न सक्छौं, न त अन्य कुनै कार्य नै गर्न सक्छौं । यसरी जीवनको हर कार्यमा ध्यानको महत्त्व रहेको छ । ध्यान मानव जीवनको अभिन्न अंग हो, अपरिहार्य चीज हो । ध्यान मानव कल्याणको माध्यम हो । ध्यानलाई हामीले बुझेर, नबुझेर दैनिक व्यवहारमा प्रयोग गरिराखेका हुन्छौं । ध्यानकै माध्यमले हाम्रा गतिविधिलाई व्यवस्थित बनाइराखेका हुन्छौं । हाम्रा सम्पूर्ण कार्यहरु ध्यानकै माध्यमले सफल भइराखेका हुन्छन् ।

लेख्नेले ध्यान पुऱ्याएर लेखेन भने लेखाइको कुनै अर्थ रहँदैन । पढ्नेले ध्यान दिएर पढेन भने पढाइको कुनै अर्थ रहँदैन । बोल्नेले ध्यान दिएर बोलेन भने बोलीको कुनै अर्थ रहँदैन । हिँड्दाखेरि ध्यान दिएर हिँडेन भने कतिबेला दुर्घटनामा परेर के घट्ना घट्न सक्छ, भन्नै सकिँदैन । हाम्रो जीवनका दैनिक क्रियाकलापहरु त्यस्ता छैनन् जसलाई ध्यानबिना गर्न सकियोस् । ध्यान दिएर नै हामीले जीवनको प्रत्येक कार्यलाई पूर्णताका साथ गर्न सक्छौं, सफलता प्राप्त गर्न सक्छौं । यसरी भौतिक संसारमा हेऱ्यौं भने ध्यान आफसेआफ भइरहेको पाउँछौं । के शिक्षित, के अशिक्षित, के विद्वान्, के डाक्टर, के इन्जिनियर, के वैज्ञानिक, चाहे व्यापारी हुन् वा कर्मचारी, कलाकार हुन् वा नेता, कृषक हुन् वा मजदुर अर्थात् जो कोही नै किन नहुन्, सबैले ध्यान दिएरै प्रत्येक कार्य गरेका हुन्छन् । ध्यानबिना न डाक्टरले बिरामीको उपचार गर्न सक्छ, न त अप्रेशन नै । त्यस्तै ध्यानबिना न कृषकले खेती गर्न नै सक्छ, न त कलकारखानामा कार्य गर्ने मजदुरले नै केही गर्न सक्छ । जसरी हेरे पनि, जुनसुकै क्षेत्रका व्यक्तिलाई हेरे पनि उनीहरुले ध्यानलाई नै जीवनमा उतारिराखेको पाउँछौं, ध्यानकै माध्यमबाट उन्नति प्रगति गरेको पाउँछौं । जसले ध्यान दिएर कार्य गऱ्यो उसले नै सफलता प्राप्त गरेको हुन्छ । ध्यानबिनाको कार्य सधैं असफल हुन्छ, अपुरो हुन्छ, अधुरो हुन्छ ।

यदि साँच्चै ध्यानबिना हाम्रो प्रत्येक कार्य असफल हुन्छ, ध्यानबिना कुनै कार्य गर्न सकिँदैन भने किन ध्यानलाई महत्त्व नदिने ? जीवनदेखि मृत्युसम्म, स्वप्नदेखि संसारसम्म, स्थूलदेखि सूक्ष्मसम्म यत्रतत्र ध्यानबिना हामीले केही गर्न सक्दैनौं भने किन ध्यानको बारेमा सोध, खोज, अनुसन्धान नगर्ने ? किन यसलाई अझै व्यवस्थितरुपमा जीवनमा नउतार्ने ? यसैले ध्यानको वास्तविक महत्त्वलाई बुझेर दैनिक जीवनमा पूर्णताका साथ प्रयोग गर्न सक्यौं भने हाम्रो भौतिक जीवन सफल हुने कुरामा कुनै शंका नै रहँदैन ।

भौतिक संसारमा जति ध्यानको महत्त्व रहेको छ, त्यसभन्दा कैयौं गुणा महत्त्व आध्यात्मिक क्षेत्रमा रहेको छ । हुन त शरीर धारण गरेपछि शरीरगत रुपमा सफल हुनु पनि अति नै आवश्यक छ । त्यसैले शरीरगत सफलता ध्यानको माध्यमबाट प्राप्त गर्न सकिने कुरा त हामीले माथि नै चर्चा गरिसक्यौं ।

मानव जीवन आफैमा रहस्यले भरिएको छ । मानव जीवनको अर्थ सामान्यरुपमा मानिसहरुले बुझ्न सक्दैनन् । मानव शरीर परब्रह्मको उच्चतम सृष्टि हो । मानव शरीर अथाह शक्ति, क्षमता, सामर्थ्यले सु-सज्जित छ तर पनि मानवले यो कुरा बुझेको हुँदैन । अतुलनीय शक्तिले भरिपूर्ण मानवले आफूलाई शक्तिहीन, निरीह ठानिरहेको हुन्छ । आफूभित्रको क्षमता, सामर्थ्यलाई जागृत गर्नेतर्फ उन्मुख नभई भौतिक सम्पदातर्फ आकर्षित भइराखेको पाउँछौं । बाहिरी सम्पत्ति, बाहिरी मान सम्मानलाई पूर्णता ठानी यिनै

चीजको प्राप्तिको लागि मानवले आफ्नो सारा तागत, मेहनत, समय लगाइराखेको हुन्छ । यी सबै चीजहरु केवल शरीरगत हुन् , अस्थायी हुन् अर्थात् शरीर हुँदासम्म मात्र हुन् भन्ने बिर्सिराखेको हुन्छ । त्यसैले हामीले आफ्नो जीवनको बारेमा सोच्नुपर्दछ, जन्मनु र मर्नु मात्रलाई जीवन ठान्नु हुँदैन । जीवनको उद्देश्यलाई बुझ्ने चेष्टा गर्नुपर्दछ, जीवनको अर्थ बुझ्ने कोशिश गर्नुपर्दछ, आत्माको यात्रामा प्राप्त भएको यस जीवनको रहस्य बुझ्ने प्रयास गर्नुपर्दछ । जीवनको अर्थ बुझ्न, यसको गूढ रहस्य उजागर गर्न हामीले ध्यानको सहारा लिन सक्दछौँ, ध्यानलाई माध्यम बनाउन सक्दछौँ । आध्यात्मिक उच्चता पनि हामीले ध्यानको माध्यमबाट प्राप्त गर्न सक्दछौँ ।

## ध्यान भनेको के हो ?

ध्यान भन्नेबित्तिकै सामान्यतया एकाग्र, एकचित्त भएर गरिने प्रक्रिया वा विधिलाई बुझिन्छ । कुनै विचार वा चिन्तनप्रति आफ्नो भावनालाई केन्द्रित गरी त्यसैमा हराउने कलाको नाम नै ध्यान हो । ज्ञानको लागि गरिने विधि नै ध्यान हो । ध्यान भन्नाले निर्विचार मन बनाएर भित्र पस्ने प्रक्रियाको नाम हो ।

यसरी हामीले खोतल्दै गयौं भने ध्यानका हजारौं-लाखौं परिभाषाहरु पाउन सक्छौं । सृष्टिको विकाससँगै ऋषिमुनिहरुले ध्यानलाई अंगीकार गरेको पाउँछौं । यसैले ध्यान हेर्दा सामान्य शब्दजस्तो लागे पनि यसले विराट् अर्थ बोकेको पाउँछौं । ध्यानको विराटताभित्र नै समस्त मानवहरुको कल्याण छिपेको छ, मानव जीवनको गूढ रहस्य छिपेको छ । यसैले पनि ध्यानको कति ठूलो महत्त्व छ, यसभित्र कति विराटता छिपेको छ, यसको परिभाषाको कति व्यापक अर्थ छ भन्ने कुरा शब्द चर्चाभन्दा धेरै पर रहेको पाउँछौं ।

ध्यानको परिभाषा विभिन्न शास्त्रहरुमा पनि विभिन्न रुपबाट दिएको पाउँछौं । ध्यान शब्दको शब्द विन्यासबाट हेर्‍यौं भने **"ध्यै चिन्तायाम्"** धातुबाट ध्यान शब्द बन्दछ । अतः ध्यान त्यस ज्ञानधाराको नाम हो अर्थात् धारावाहिक ज्ञानको नाम हो जो अविच्छिन्न एक रुपले उक्त चीजमा लागिरहेको हुन्छ ।

त्यस्तै योग दर्शनमा ध्यानलाई यसरी परिभाषित गरेको पाइन्छ- **"तत्र प्रत्ययैकतानता ध्यानम्"**- (योग दर्शन ३/२)

चित्तवृत्तिलाई गङ्गाको प्रवाहजस्तै अथवा तेलको धाराजस्तो अटूट अविच्छिन्न रुपबाट निरन्तर ध्येय वस्तुमा नै अनवरत लगाइरहनुलाई ध्यान भनिन्छ ।

त्यस्तैगरी गुरु गोरखनाथद्वारा रचित सिद्ध सिद्धान्त पद्धतिमा ध्यानको बारेमा यसरी व्याख्या गरिएको छ -

**अथ ध्यानमिति कश्चन परमाद्वैतस्य भावः स एवात्मेति यथा यद्यत्स्फुरति तत्तत्स्वरुपमेवेति भावयेत् सर्व भूतेषु मम दृष्टिश्च इति ध्यान लक्षणम् ॥३८॥**

ध्यानको वर्णन यसरी गरिएको छ - नाम, रुपभन्दा परको अद्वैतस्वरुप नै परमात्मा हो र यही नै आत्मा हो । संसारमा जुन-जुन वस्तुहरु देखिन्छन्, तिनीहरुमा आत्मास्वरुपको नै भावना राख्नुपर्दछ, समस्त भूतमात्रमा समदृष्टि अथवा आत्मस्वरुपको भावना राख्नु नै ध्यान हो अर्थात् समस्त चराचर जगत् एवं समस्त प्राणीमा एक मात्र परमात्मा व्याप्त भएको भावना राख्नु नै ध्यान हो, यही नै ध्यानको लक्षण हो ।

ध्यानलाई उच्चतम रुपबाटै परिभाषित गर्दै गुरु गोरखनाथले गोरखवाणी-सिस्ट पुराणमा यसो पनि भन्नुभएको छ- **निरंजन उपरांति ध्यान नाहीं ।**

ध्यान दर्शन हो, चैतन्य तत्त्वको सर्वत्र अनुभव नै दर्शन अथवा ध्यान हो एक मात्र ध्येय-ध्यानको विषय नै निरञ्जन हो, निरञ्जनभन्दा पछि ध्यानको लागि केही पनि रहँदैन ।

गोरक्ष पद्धतिमा ध्यानको बारेमा यसरी परिभाषित गरिएको छ -

**स्मृत्यर्थे सर्वचिन्तानां धातुरेकः प्रवर्तते**
**यचिन्ते निर्मला चिन्ता नद्विध्यान पचक्षते ॥१६२॥**

सारा चिन्ताको स्मृति अर्थमा 'स्मृचिन्तायौ' एक धातु छ यही स्मृतिरुप चिन्ता निर्मल भएर एक वस्तुनिष्ठ मात्र भयो भने 'ध्यान' भनिन्छ ।

योगी ऋषि पतञ्जलिले अष्टांग योग अर्थात् योगका आठ अंगमा ध्यानलाई पनि समावेश गर्नुभएको छ , यम, नियम, आसन, प्राणायाम, प्रत्याहार, धारणा, ध्यान र समाधि योगका आठ अंगका रुपमा रहेका छन् । यसप्रकार योगको सातौं अंगका रुपमा, योगको उच्चतम विन्दुको रुपमा ध्यानलाई लिइएको छ । त्यसैले पनि ध्यानको सफलताको लागि अगाडिका छवटै अंगको पनि विकास हुनुपर्ने आश्यकता हुन्छ अथवा यम, नियम, आसन, प्राणायाम, प्रत्याहार र धारणाको विकसित रुप नै ध्यान हो भनेर पनि परिभाषित गर्न सक्दछौं ।

अहिंसा, सत्य, अस्तेय (अरुको वस्तु नलिनु, चोरी नगर्नु), ब्रह्मचर्य एवं अपरिग्रह (संकलन नगर्नु) लाई यम भनिन्छ । त्यस्तै पवित्रता, सन्तोष, तप, स्वाध्याय एवं ईश्वर प्रणिधान (ईश्वरप्रति अनुग्रहित हुनु) लाई नियम भनिन्छ । आसन भन्नाले सुखपूर्वक स्थिररुपले धेरै समयसम्म बस्न सक्नु हो । श्वास प्रश्वासको गतिलाई यथाशक्ति नियन्त्रण

गर्नुलाई प्राणायाम भनिन्छ । इन्द्रियहरुलाई अनावश्यक विषयभोगमा नलगाई नियन्त्रण गर्नु, विषयबाट विमुख गर्नु, वैराग्य ल्याउनुलाई प्रत्याहार भनिन्छ । इन्द्रिय तथा मनलाई अन्तर्मुखी बनाई कुनै एक ठाउँमा स्थिर गरेर राख्नुलाई धारणा भनिन्छ अथवा मनलाई बाहिरी संसारबाट हटाई सूक्ष्म लक्ष्य आत्मा-परमात्मामा केन्द्रित गर्नु धारणा हो ।

जब क्रमैसंग अगाडिका योगका अंगहरु विकसित हुँदै आउँछन् तब मात्र मन अन्तर्यामी ब्रह्मको आनन्दमय, ज्योतिर्मय तथा शान्तिमय स्वरुपमा एकाकार हुन सक्दछ र त्यही नै ध्यान हो । ध्यानको पूर्ण विकसित रुप समाधि हो । त्यसैले ध्यानको सफलता योगका छवटा अंगहरुको विकासमा लुकेको पाइन्छ ।

ध्यान एक विशुद्ध आध्यात्मिक क्रिया हो जसबाट व्यक्तिले विविध अनुभूतिहरु प्राप्त गर्न सक्दछ, आन्तरिक रुपबाट आफूलाई परिमार्जित गर्न सक्दछ र ऊ मोक्षसमेतको अधिकारी बन्न सक्दछ । तसर्थ, हाम्रा पूर्वज ऋषि, महर्षिहरुले आत्माको विकास र लाभको लागि सर्वोत्कृष्ट प्रक्रियाको रुपमा सदा नै ध्यानलाई औंल्याएको पाइन्छ भने पाश्चात्य मनोवैज्ञानिकहरुले ध्यानलाई मानसिक एकाग्रतासँग सम्बन्धित मान्दछन् र मनको विशिष्ट अवस्था ठान्दछन् जुन ध्यानको प्रारम्भिक अवस्था मात्र हो । वास्तवमा आध्यात्मिक प्रक्रियाहरु विज्ञानको पहुँच र वैज्ञानिक उपकरणहरुको सामर्थ्यभन्दा धेरै-धेरै माथि छन् । तथापि वैज्ञानिकहरुले पनि आफ्नो किसिले ध्यानमाथि अनुसन्धान गरिरहेका छन् । विज्ञानीहरु यो निष्कर्षमा पुगे कि मानिसको मस्तिष्कमा अल्फा तरंगहरु उत्पन्न हुँदा उसले शान्ति र आनन्द प्राप्त गर्दछ । विज्ञानको मान्यता थियो कि यो एक प्राकृतिक प्रक्रिया हो तसर्थ, मानिसले चाहेर र कोशिश गरेर अल्फा तरंगहरु उत्पन्न गर्न सक्दैन । तर जब केही योगी र ध्यानीहरुले आफ्नो ध्यानको प्रयोगद्वारा अल्फा तरंगहरु उत्पन्न गरे, वैज्ञानिक र डाक्टरहरु आश्चर्यचकित भए । डाक्टरहरुको एउटा दलले परीक्षण गर्दा पत्ता लाग्यो कि ध्यान गर्नेले आफ्नो इच्छाशक्तिद्वारा अल्फा तरङ्गहरु उत्पन्न गर्न सक्दछन् र आफ्नो इच्छाले तिनीहरुलाई रोक्न पनि सक्दछन् । यो वैज्ञानिकहरुको लागि पनि अचम्मको विषय बन्यो ।

साल्टर नाम गरेका अमेरिकी वैज्ञानिकले यस विषयमा धेरै अनुसन्धान गरेका छन् । एकपल्ट उनको मनमा विचार आयो कि जब मानिस ध्यान गरेर शान्त बन्दछ उसले मस्तिष्कमा अल्फा तरंगहरु पैदा हुन्छन् भने यो क्रिया पशुपंछी र जनावरमा किन हुँदैन ? यसको लागि उनले एउटा बिरालोमाथि प्रयोग गरे र बिरालो शान्त अवस्थामा हुँदाखेरि अल्फा तरंगहरु उत्पन्न भएको तथ्य पत्ता लगाए ।

जब मानिस शान्त हुन्छ, शरीर शिथिल हुन्छ, ऊ मौन हुन्छ, कुनै तनाव रहँदैन अनि त्यस शान्त स्थितिबाट अल्फा तरंग उत्पन्न हुन्छन् ।

त्यस्तै जोन ह्वाइटले पनि ध्यानसम्बन्धी खोज गरेका छन् । उनको ध्यानको परिभाषामा हाम्रा ऋषिमुनिहरुद्वारा वर्णित ध्यानको छाप भेटिन्छ । उनका अनुसार ध्यान चेतनाको एउटा विशिष्ट अवस्था हो र यसको अन्त समाधिमा हुन्छ । उनले आफ्नो बहुचर्चित पुस्तक 'The Meeting of Science and Spirit' मा ध्यानलाई जीवनको लागि उपयोगी दर्शाउँदै यसका विभिन्न प्रकारका लाभको उल्लेख गरेका छन् । उनका अनुसार ध्यान शारीरिक, मानसिक, सामाजिक तथा आत्मिक स्तरमा लाभप्रद छ । यसबाट शारीरिक स्वास्थ्य बढ्दछ, मानसिक तनाव, चिन्ता एवं हिंस्रकवृत्तिमा कमी आउँछ र आत्मज्ञान र आत्मविकास हुन्छ ।

ध्यानबारे विभिन्न वैज्ञानिकहरुले विभिन्न अनुसन्धानहरु गरिरहेका छन् जसबाट ध्यान कुनै धर्म, संघ, सम्प्रदायको परम्परा मात्र नभई शरीर विज्ञानबाट पनि प्रमाणित विषय बनेको पुष्टि हुन्छ जसबाट ध्यान विश्वव्यापीरुपमा खोज र चासोको विषय बनिरहेको छ । क्रमश:

जय गुरुदेव !

# अनुभव अनूभुति

२०५६ सालदेखि नै म धेरै बिरामी थिएँ । डाक्टरी उपचारदेखि लिएर धामीझाँक्री धेरै लगायौं तर पनि रोग ठीक भएको थिएन । रोगले झन्झन् च्याप्दै लगिरहेको थियो । तर मलाई सानैदेखि भगवान्प्रति विश्वास थियो । समय बित्दै गयो । सायद गुरुदेवको कृपाले गर्दा होला, हामी बसेको घरमा नै सिद्धाश्रम शक्ति केन्द्रको चितवन सम्पर्क कार्यालयको स्थापना भयो । त्यसबेला हामी नारायणगढमा बस्ने गर्थ्यौं । त्यहीं सम्पर्क कार्यालयमा कार्यरत दाइहरुको सल्लाहबमोजिम मेरो श्रीमान्ले उपचारको लागि काठमाडौंको कमलादीमा लिएर आउनुभयो । त्यतिबेला मलाई आश्रमको बारेमा केही पनि जानकारी थिएन । तीन दिनसम्म त उपचारका लागि आश्रम गएँ । तर कर्मदोष वा नराम्रो शक्तिको आक्रमणबाट हो, मलाई आश्रममा जान मन लागेन । बरु आश्रममा भन्दा त अन्य जान्नेकहाँ पो जान मन लाग्यो । त्यस्तै, जान्नेकहाँ जाने क्रममा एकदिन म एकजना साईभक्तकहाँ पुगें । उहाँको कोठाको चारैतिर साईबाबाको तस्वीर राखिएको थियो । माथिल्लो साइबाबाको तस्वीरसँगै परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको गृहस्थ स्वरुपको मुसुक्क हाँस्नुभएको तस्वीर देखें । गुरुदेवको तस्वीर देखेपछि मलाई अत्यन्तै खुशी लाग्यो । उहाँ पनि गुरुदेवलाई मान्नुहुन्छ भन्ने थाहा पाएर आनन्दित भएँ । उहाँले मेरो नारी हेर्ने, चामल हेर्ने गर्नुभयो । उहाँले भन्नुभयो, तपाईंलाई साह्रै नै बिगारेको छ, धेरै दिनसम्म फुक्नुपर्छ भन्नुभयो । फुकिसकेर त्यहाँबाट हिंड्ने समयमा मेरो आँखा त्यही तस्वीरमा पुग्यो । अचम्मको कुरा के भने त्यो तस्वीर गुरुदेवको नभएर साईबाबाको देखिन पुग्यो । म त छक्कै परें । मैले जान्ने बाबासँग यसबारेमा सोधें । ती बाबाले भने, सायद तपाईंको गुरुदेवले यहाँ पठाउनुभएको होला, त्यसैले तपाईंको गुरुदेव देखिनुभएको हो । गुरुदेवले त्यस ठाउँमा देखिनुभएर के संकेत दिनुभएको थियो, मैले केही पनि बुझ्न सकिन । त्यसपछि मैले अन्त पनि हेराउने र औषधि खाने गर्न थालें तर रोग कत्ति पनि ठीक भएन । मलाई प्राय: टाउकोदेखि लिएर शरीर सबै पोल्ने गर्थ्यो, मनमा एक प्रकारको भय उत्पन्न हुन्थ्यो, कतै ठूलै घटना हुन लागेजस्तो आभास हुन्थ्यो, दिउँसोभन्दा रातमा रोगले बढी च्याप्थ्यो । राति मलाई निदाउन गाह्रो पर्थ्यो । यदि निदाए पनि झस्केर चाँडै नै बिउँझिन्थें । बिउझिंदा मेरो अगाडि प्राय: एउटा कालो छायाँ देखिन्थ्यो । त्यो देखेपछि मेरो मनमा भित्रभित्रै कहाली लागेर आउँथ्यो । कहाँ जाने, के गर्ने मलाई साह्रै नै छटपटी हुन्थ्यो । मेरो मनमा साह्रै नै निराशा छाउँदै गयो । केही सीप नलागेपछि एकदिन बेलुकी सुत्ने बेलामा गुरुदेवलाई सम्झेर धेरै बेरसम्म रोएँ । गुरुदेवसँग धेरै पुकारा गरें । मेरा ससाना दुई बच्चा थिए । मलाई केही भइहाले बच्चाहरुको के हालत हुने हो भन्ने चिन्ता थियो । यस्तैमा गुरुदेवलाई सम्झेर रुँदारुँदै म निदाउन पुगिछु । निदाएपछि मैले कस्तो सपना देखें भने एउटा खोलाको बीचमा एउटा सानो मन्दिर थियो । त्यस मन्दिरमा सबैजना पालैपालो पौडिएर जाँदै गुरुदेवसँग प्रश्न सोध्दै आउँदै गर्नुभएको थियो । त्यस्तै खोलाको डिलमा म पनि गुरुदेवलाई प्रश्न सोध्न भनेर उभिएकी थिएँ, कसरी पौडिएर गएर प्रश्न सोध्ने भन्ने मनमा लागिरहेको थियो । अचानक म उभिएको ठाउँ नजिकै जलबाट गुरुदेव निस्कनुभयो र मेरो गर्दनमा हात राख्नुभयो । त्यसैबेला मैले गुरुदेवसँग सोधें कि गुरुदेव मलाई ठीक हुन्छ कि हुँदैन ? गुरुदेवले हुन्छ भनेर जवाफ दिनुभयो । मलाई अरु कुराहरु पनि सोध्न मन लागेको थियो तर यतिकैमा बिउँझिएँ । बिउँझँदाखेरि त मेरो शरीरमा कुनै पीडा थिएन, शरीर हल्का भएको थियो, मनमा एक प्रकारको खुसी छाइरहेको थियो जुन खुसी म व्यक्त गर्न नै सक्दिन । त्यही दिन बिहान खाना खाएर बच्चालाई आफूसँगै राखेर यसो सुतिरहेकी थिएँ तर निदाएकी थिइँन । यत्तिकैमा अचानक ब्रह्माण्डबाट केही कोठाभित्र पसेजस्तो भयो, कोठामा एक प्रकारको गुञ्जन पैदा भइरहेको थियो । मेरो टाउको जुरुक्क उचालियो, मेरो शरीरमा एकप्रकारको ऊर्जा (शक्ति) उत्पन्न भयो । एकछिनपछि कोठामा उत्पन्न भएको गुञ्जन आफै हराउँदै गयो । त्यसभन्दा अघिका दिनमा म एक्लै कहीं पनि जान सक्ने अवस्था थिएन । त्यस घटनापछि मलाई आश्रम जान मन लाग्न थाल्यो । अनि प्राय: दुई बच्चालाई आफू एक्लैले लिएर आश्रम जाने गर्न थालें । आश्रमका कार्यक्रमहरुमा सहभागी हुन थालें । त्यसताका प्रत्येक महिनाको अन्तिम शनिवार तान्त्रिक साधनाहरु सम्पन्न हुने गर्दथे, मैले पनि ती साधनाहरुमा सहभागी हुने सौभाग्य प्राप्त गरें । मैले सम्पन्न गरेको सबैभन्दा पहिलो साधना कुण्डलिनी शक्ति माता साधना हो । यसपश्चात् क्रमश: अन्य साधनाहरुमा भाग लिंदै गएँ । मेरो रोग पनि गुरुकृपावश बिस्तारै हट्दै गयो । मलाई कुनै बेला केही समस्या परेमा सद्गुरुदेवहरुले नै साथ दिनुहुन्थ्यो । सद्गुरुदेवहरुको कृपाबाट नै मैले नयाँ जीवन प्राप्त गरेको हुँ । यी अनुभवहरु मैले साधना शुभारम्भ गर्नुभन्दा अगाडिका हुन् । साधना गर्न थालेपछिका अन्य धेरै अनुभवहरु अनूभुति गर्ने सौभाग्य पाएकी छु तर ती सम्पूर्ण अनुभवहरु हाल लेख्नलाई असमर्थ छु । जय गुरुदेव !

*–पवित्रा खरेल*
*कलंकी*

## शुभकामना

परमपूज्य सद्गुरुदेवहरुको असीम कृपा, अनुकम्पा एवं आशीर्वादस्वरुप यस तीनकुने आ.स.के. प्रस्तावित सम्पर्क कार्यालयको रुपमा रुपान्तरित भएकोमा सद्गुरुदेवहरुको चरणकमलमा कोटि कोटि नमन अर्पण गर्दै विजयादशमी तथा शुभ दीपावली २०६६ को पावन अवसरमा स्वदेश तथा विदेशमा रहनुहुने सम्पूर्ण साधक साधकिाहरुमा हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं।

**सिद्धाश्रम शक्ति केन्द्र**
प्रस्तावित सम्पर्क कार्यालय तीनकुने
कोटेश्वर, काठमाडौं

## शुभकामना

हाम्रा सम्पूर्ण सदस्य तथा शुभचिन्तक महानुभावहरूमा विजयादशमी तथा दीपावली २०६६ को शुभ उपलक्ष्यमा मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

**सहस्रधारा बचत तथा**
**ऋण सहकारी संस्था लि.**
**बानेश्वर १०, काठमाडौं, फोन ०१४७८०९१२**

## शुभकामना

२०६६ सालको विजयादशमी तथा शुभ दीपावलीको उपलक्ष्यमा समस्त नेपाली दाजुभाइ तथा दिदीबहिनीहरूमा हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

**विष्णु बुढानीलकण्ठ गा.वि.स.**
**काठमाडौं**

## शुभकामना

२०६६ सालको विजयादशमी तथा शुभ दीपावलीको उपलक्ष्यमा सम्पूर्ण ग्राहकहरुलाई हार्दिक मंगलमय शुभकामना । साथै, सस्तो तथा सुलभ राष्ट्रिय तथा अन्तर ाष्ट्रिय हवाइ टिकटका लागि हामीलाई सम्पर्क गर्नुहोला ।

**MLM Tours And Travels PVT.**
शंखमूल रोड, नयाँबानेश्वर, काठमाडौं
फोनः ०१२१०२३०२, ४७८२२५८

## शुभकामना

विजयादशमी तथा शुभ दीपावली २०६६ को शुभ उपलक्ष्यमा सिद्धाश्रम शक्ति केन्द्रका समस्त कार्यकर्ता, साधक साधिका एवं शुभेच्छुकहरूको सुख शान्ति एवं समृद्धिका लागि हार्दिक मंगलमय **शुभकामना** व्यक्त गर्दछौं ।

**कुलबहादुर कार्की**
**रामकला कार्की**
**प्रमोद र अमेश कार्की**

## शुभकामना

**विजयादशमी तथा शुभ दीपावली २०६६ को उपलक्ष्यमा सम्पूर्ण नेपालीहरुमा हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।**

विभिन्न किसिमका स्टेशनरी सामग्री, सेनेटरी, इलेक्ट्रीक सामान र निर्माण सामाग्रीहरुको थोक तथा खुद्रा बिक्रेता–

**कुमारी ट्रेडिङ्ग एण्ड सप्लायर्स**
**बालाजु, काठमाडौं फोन ९८४१५५८१६१**

## शुभकामना

विजयादशमी तथा शुभ दीपावली २०६६ को शुभ उपलक्ष्यमा सिद्धाश्रम शक्ति केन्द्रका समस्त कार्यकर्ता, साधक साधिका एवं शुभेच्छुकहरूको सुख शान्ति एवं समृद्धिका लागि हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

**दीपक पराजुली, उषा पराजुली**
**तथा समस्त पराजुली परिवार**

# नवदुर्गाका नौ स्वरूप

माता दुर्गा सृष्टिकी आदिशक्ति हुनुहुन्छ। ब्रह्मा, विष्णु, महेश्वरसमेत उहाँकै शक्तिबाट सृष्टि, स्थिति र संहार गर्नुहुन्छ। सूर्य, चन्द्रादि अन्य देवतासमेत उनै शक्तिबाट सम्पूर्ण कार्य सम्पन्न गर्नुहुन्छ। यस्ती जगज्जननी आद्याशक्तिको नौवटा स्वरूपमा वर्णन गरिएको छ जसलाई नवदुर्गा भनिन्छ।

आद्याशक्ति माता दुर्गाद्वारा यी नौ रूप धारण गर्नुको पनि विभिन्न उद्देश्यहरू छन्। आसुरी शक्तिको विनाश एवं भक्तहरूको रक्षा र धर्मको पुनरुद्धारका लागि नै माता आफ्ना दिव्य शक्तिहरूका साथ विभिन्न रूपमा प्रकट हुने गर्नुहुन्छ। नवरात्रिमा माता दुर्गाका तिनै रूपहरूको पूजा, उपासना हिन्दु जगत्ले गर्ने गर्दछ।

प्रत्येक भक्तले माताको नवै रूपको बारेमा जान्नु जरुरी हुन्छ। नवरात्रि पूजन परम्परामा पनि नौ दिनसम्म प्रत्येक देवीहरूको ध्यान, पूजा, अर्चना, साधना आदि गर्ने गरिन्छ। त्यसपछि कुमारी कन्याको पूजा गर्ने पनि चलन छ। यस अंकमा माताका नवै स्वरूपहरूको बारेमा संक्षिप्त परिचय पाठकवर्गसमक्ष प्रस्तुत गरेका छौँ।

## शैलपुत्री

**वन्दे वाञ्छितलाभाय**
**चन्द्रार्धकृतशेखराम् ।**
**वृषारूढां शूलधरां**
**शैलपुत्रीं यशस्विनीम् ॥**

*शिरमा अर्धचन्द्र धारण गर्नुभएकी, वृषभ-स्थिता, दाहिने हातमा त्रिशूल र बायाँ हातमा कमल-पुष्पले सुशोभित हुनुभएकी ।*

माता दुर्गा आफ्नो पहिलो स्वरूपमा 'शैलपुत्री' नामद्वारा चिनिनुहुन्छ । पर्वतराज हिमालयकी पुत्रीको रूपमा उत्पन्न हुनु भएकोले उहाँको नाम शैलपुत्री रहेको थियो । शैलपुत्री देवीको विवाह पूर्वजन्ममा जस्तै यस जन्ममा पनि भगवान् शंकरसँग नै भयो । नवरात्रि पूजनमा प्रथम दिन उहाँको पूजा र उपासना गरिन्छ । यो प्रथम दिनको पूजा र उपासनामा योगीहरू आफ्नो मनलाई मूलाधार चक्रमा स्थित गर्दछन् र यहींबाट नै उनीहरूको योग साधनाको शुरुआत हुन्छ ।

## ब्रह्मचारिणी

**दधाना करपद्माभ्या-**
**मक्ष मालाकमण्डलू ।**
**देवी प्रसीदतु मयि**
**ब्रह्मचारिण्यनुत्तमा ॥**

*दाहिने हातमा अक्षमाला एवं बायाँ हातमा कमण्डलु धारण गर्नुभएकी ।*

माता दुर्गाका नौ शक्तिहरूमा दोस्रो स्वरूप ब्रह्मचारिणीको हो । यहाँ ब्रह्म शब्दको अर्थ तपस्या हो, ब्रह्मचारिणी अर्थात् तपको आचरण गर्नुहुने । माताको उपासनाले मनुष्यमा तप, त्याग, वैराग्य, सदाचार, संयमको वृद्धि हुन्छ । जीवनका कठीन संघर्षमा पनि उसको मन कर्तव्य पथबाट विचलित हुँदैन । उसलाई सर्वत्र सिद्धि र विजयको प्राप्ति हुन्छ । नवरात्रिको दोस्रो दिन माताको यसै रूपको उपासना गरिन्छ । यस दिनमा साधकको मन स्वाधिष्ठान चक्रमा स्थित रहन्छ । यस चक्रमा अवस्थित योगीले सजिलै उहाँको कृपा र भक्ति प्राप्त गर्दछन् ।

## चन्द्रघण्टा

**पिण्डजप्रवरारूढा**
**चण्डकोपास्त्रकैर्युता ।**
**प्रसादं तनुते मह्यं**
**चन्द्रघण्टेति विश्रुता ॥**

*मस्तकमा घण्टा आकारको अर्धचन्द्र, सिंहवाहिनी, खड्ग, बाण, त्रिशूल आदि शस्त्र-अस्त्रादिले विभूषित दश हातयुक्त हुनुभएकी ।*

माता दुर्गाको तेस्रो शक्तिको नाम चन्द्रघण्टा हो । उहाँको यो स्वरूप परम शान्तिदायक र कल्याणकारी छ । उहाँको घण्टसमान भयानक चण्डध्वनिबाटै अत्याचारी दानव, दैत्य, राक्षसहरू सदैव प्रकम्पित हुन्छन् ।

यस दिनमा साधकको मन 'मणिपूर' चक्रमा प्रविष्ट हुन्छ । माता चन्द्रघण्टाको कृपाबाट साधकलाई अलौकिक वस्तुहरूको दर्शन हुन्छ, दिव्य सुगन्धहरूको अनुभव हुन्छ तथा विविध प्रकारका दिव्य ध्वनिहरू सुनिन थाल्छन् ।

## कूष्माण्डा

**सुरासम्पूर्णकलशं**
**रुधिराप्लुतमेव च ।**
**दधाना हस्तपद्माभ्यां**
**कूष्माण्डा शुभदास्तु मे ॥**

*अष्टभुजाले विख्यात्, कमण्डलु, धनुष, बाण, कमल-पुष्प, अमृतपूर्ण कलश, चक्र, गदा तथा रक्तयुक्त पात्र धारण गर्नुभएकी ।*

आफ्नो मन्द र हलुका हँसाइद्वारा अण्ड अर्थात् ब्रह्माण्डको सृजना गर्नुभएको कारण उहाँलाई कूष्माण्डा देवीको नामले पूजिएको हो । संस्कृत भाषामा कुभिण्डोलाई कूष्माण्ड भनिन्छ। बलिहरूमा उहाँलाई कुभिण्डोको बलि सर्वाधिक प्रिय लाग्छ। नवरात्रि पूजनको चौथो दिन कूष्माण्डा देवीको उपासना गरिन्छ । यस दिन साधकको मन अनाहत चक्रमा अवस्थित हुन्छ। त्यसैले यस दिन साधकले अत्यन्त पवित्र र स्थिर मनले उहाँको स्वरूपलाई ध्यानमा राखेर पूजा, उपासना आदि कार्यमा लाग्नुपर्छ ।

## स्कन्दमाता

**सिंहासनगता नित्यं**
**पद्माश्रितकरद्वया ।**
**शुभदास्तु सदा देवी**
**स्कन्दमाता यशस्विनी ॥**

*बालक स्कन्दलाई दुई हातहरूले काखमा च्याप्नुभएकी, बाँकी दुई हातमा कमल-पुष्प धारण गर्नुभएकी, सिंहमा चढ्नुभएकी ।*

माता दुर्गाको पाँचौँ स्वरूप स्कन्दमाताको पूजा नवरात्रिको पाँचौं दिनमा गरिन्छ। यस दिनमा साधकको मन विशुद्ध चक्रमा अवस्थित हुन्छ । विशुद्ध चक्रमा मन अवस्थित भएको साधकका समस्त बाह्य क्रियाहरू एवं चित्तवृत्तिहरू लोप हुन्छ । ऊ विशुद्ध चैतन्यस्वरूपतिर अग्रसर भइरहेको हुन्छ । उसको मन समस्त लौकिक, सांसारिक, मायिक बन्धनबाट मुक्त भएर पद्मासना स्कन्दमाताको स्वरूपमा पूर्ण तल्लीन हुन्छ । उसले आफ्नो समस्त ध्यान-वृत्तिहरूलाई एकाग्र गर्दै साधनाको पथमा अगाडि बढ्नुपर्दछ ।

## कात्यायनी

**चन्द्रहासोज्ज्वलकरा**
**शार्दूलवरवाहना ।**
**कात्यायनी शुभं दद्या**
**द्देवी दानवघातिनी ॥**

*शार्दूल वाहन हुनुभएकी, दानवघातिनी, चार भुजायुक्त, अभय र वरदमुद्रा तथा कमल-पुष्प र खड्ग धारण गर्नुभएकी ।*

दुर्गा माताको छैटौँ स्वरूपको नाम कात्यायनी हो । जब पृथ्वीमा दानव महिषासुरको अत्याचार बढ्न थाल्यो तब त्रिदेवले आ-आफ्नो तेजको अंश दिएर एक देवी उत्पन्न गर्नुभयो । महर्षि कात्यायनले सर्वप्रथम उहाँको पूजा गर्नुभयो । त्यसैले उहाँको नाम कात्यायनी रह्यो । यस दिन साधकको मन आज्ञा चक्रमा अवस्थित हुन्छ । उसले माता कात्यायनीको चरणमा आफ्नो सर्वस्व निवेदित गर्दछ। माताको भक्ति र उपासनाद्वारा मनुष्यलाई धेरै सजिलोसँग धर्म, अर्थ, काम र मोक्ष चारै फलहरूको प्राप्ति हुन्छ ।

## कालरात्रि

**एकवेणी जपाकर्णा-**
**पूरा नग्ना खरास्थिता ।**
**लम्बोष्ठी कर्णिकाकर्णी**
**तैलाभ्यक्तशरीरिणी ॥**
**वामपादोल्लसल्लोह**
**लता कण्टकभूषणा ।**
**वर्धनमूर्ध्वजा कृष्णा**
**कालरात्रिर्भयंकरी ॥**

*अत्यन्त भयानक स्वरूप हुनुभएकी, तर सदैव शुभ फल प्रदान गर्ने, कृष्ण वर्णकी, नासिकाबाट अग्निको भयंकर ज्वाला निकाल्ने, त्रिनेत्र र नग्न शरीर हुनुभएकी, गधामा चढ्नुभएकी, चार भुजायुक्त हुनुभएकी ।*

माता दुर्गाको सातौँ शक्तिलाई कालरात्रिको नामबाट चिनिन्छ । यस दिन साधकको मन 'सहस्रार' चक्रमा स्थित हुन्छ र उसको लागि ब्रह्माण्डका समस्त सिद्धिहरूको द्वार खुल्न थाल्दछ। यस चक्रमा स्थित साधकको मन पूर्णत: माता कालरात्रिको स्वरूपमा अवस्थित रहन्छ ।

## महागौरी

**श्वेते वृषे समारूढा**
**श्वेताम्बरधरा शुचिः ।**
**महागौरी शुभं दद्यान्**
**महादेवप्रमोददा ॥**

*श्वेत-वृषभ वाहन हुनुभएकी, समस्त वस्त्र एवं आभूषण आदि श्वेत, चार हात हुनुभएकी, अभय र वरद मुद्रा एवं डमरु र त्रिशूल धारण गर्नुभएकी ।*

माता दुर्गाको आठौँ शक्तिको नाम महागौरी हो । नवरात्रिको आठौँ दिन महागौरीको उपासना गर्ने विधान छ । उहाँको शक्ति अमोघ र तुरुन्त फल दिने किसिमको छ । उहाँको उपासनाबाट भक्तका सम्पूर्ण कल्मष धोइन्छन् र पूर्व-सञ्चित पाप पनि नष्ट हुन्छन् । माता महागौरीको ध्यान, स्मरण, पूजन, आराधना भक्तको लागि सर्वविध कल्याणकारी छ । उहाँको कृपाले अलौकिक सिद्धिहरू प्राप्त हुन्छन् । उहाँको उपासनाले उपासकको असम्भव कार्य पनि सम्भव हुन जान्छ ।

## सिद्धिदात्री

**सिद्धगन्धर्वयक्षाद्यै-**
**रसुरैरमरैरपि ।**
**सेव्यमाना सदा भूयात्**
**सिद्धिदा सिद्धिदायिनी ॥**

*कमल-पुष्पमा विराजित, सिंहवाहिनी देवी (सिद्धिदायिनी), सबै प्रकारको सिद्धि प्रदान गर्ने, शङ्ख चक्र गदा र कमल-पुष्पले युक्त चारभुजा हुनुभएकी, सिद्ध गन्धर्व यक्ष आदि र सुर-असुरहरूद्वारा सेवित हुनुभएकी ।*

माता दुर्गाको नवौँ शक्तिको नाम सिद्धिदात्री हो । उहाँ सम्पूर्ण प्रकारका सिद्धि प्रदान गर्ने हुनुहुन्छ । मार्कण्डेय पुराणअनुसार अणिमा, महिमा, गरिमा, लघिमा, प्राप्ति, प्राकाम्य, ईशित्व र वशित्व आठ सिद्धिहरू छन्। ब्रह्मवैवर्त्त पुराणको श्रीकृष्ण जन्मखण्डमा यो संख्या अठार बताइएको छ ।नवरात्रि पूजनको नवौँ दिनमा उहाँको उपासना गरिन्छ । यस दिन पूर्ण विधि-विधान र निष्ठापूर्वक साधना गर्ने साधकलाई सम्पूर्ण सिद्धिहरू प्राप्त हुन्छन् ।

# परमपूज्य सद्गुरुदेवको अवतरण यात्रा

## योगेश्वर डा. नारायणदत्त श्रीमालीज्यू

*यस स्तम्भअन्तर्गत परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको रहस्य नै रहस्यले भरिएको अवतरण यात्रालाई क्रमशः प्रकाशित गर्दै आएका छौं। आशा छ यसबाट पाठकवर्ग लाभान्वित हुनुहुनेछ।*

गुरुदेवले भन्नुभएको छ– पूर्णत्वका लागि योग, वैराग्य अनि ज्ञान पूर्णताका साथ प्राप्त गर्नु आवश्यक छ। साधारण रुपमा भन्ने हो भने योगको अर्थ कुनै दुईको मिलन हुनु, एक हुनु अथवा जोड (+) भन्ने हुन्छ। योग शब्द संस्कृतको युज् धातुबाट बनेको हो। यसको सीधा अर्थ मिल्नु अथवा एकाकार हुनु हो। योगको बारेमा धेरैले विभिन्न किसिमले व्याख्या गरेको पाइन्छ। श्रीकृष्णले गीतामा भन्नुभएको छ– 'योग कर्मसु कौशलम्'। त्यस्तै महर्षि पतञ्जलिले भन्नुभएको छ– 'योगश्चित्त वृत्तिनिरोधः'। तर गुरुदेवले यसको एउटा नयाँ अर्थ स्पष्ट गर्नुभएको छ, उहाँ भन्नुहुन्छ– गुरुले ब्रह्मत्वलाई पनि चिनेको हुन्छ र मायालाई पनि बुझेको हुन्छ। त्यसैले शिष्यको गुरुमा विलिनीकरण नै वास्तवमा योग हो। सर्वदा यसको नै अनुभव गर्नु वैराग्य हो भने यही चिन्तन रहिरहनु नै ज्ञान हो।

सूर्य सिद्धान्त शिविर चलिरहेको बेला एउटी महिलाले उठेर भनिन्– 'गुरुदेव ! के फलाम पनि सुनमा परिणत हुन्छ र ? के सूर्य सिद्धान्त यति सक्षम छ र ?' गुरुदेव एकैक्षण चुप लाग्नुभयो। त्यसपछि उहाँले सोध्नुभयो– 'तिमीसँग फलामको कुनै वस्तु छ ? छ भने ल्याऊ।' ती महिलाले फलामको एउटा काँटी गुरुदेवलाई दिइन्। गुरुदेवले त्यसलाई हातमा लिएर सूर्य सिद्धान्त प्रष्ट पार्दै फलामको काँटीलाई सुनमा परिणत गर्नुभयो।

श्रीमती शकुन्तला अडियार दक्षिण भारतकी सुप्रसिद्ध गायिका एवं सामाजिक कार्यकर्ता थिइन् र दक्षिण मात्र होइन, सम्पूर्ण भारतभरि उनको गायनको निकै प्रसिद्धि पनि छ। साथसाथै सामाजिक क्षेत्रमा उनले गरेको कार्य आफैमा आश्चर्यजनक छ। ४० भन्दा बढी सामाजिक संगठनकी अध्यक्ष तथा मन्त्री पनि भइन् उनी र उनले जीवनको प्रत्येक क्षण समाजसेवा तथा देशसेवाको लागि समर्पित गरिन्। उनकै शब्दमा, 'म चाहन्थेँ कि योग्य गुरुको प्राप्ति होस्, अनि उहाँको चरणमा बसेर म आफ्नो मनको व्यथा उहाँलाई बताउन पाऊँ, उहाँबाट सही ज्ञान प्राप्त गरी यसै जीवनमा नै त्यस परम ज्योतिमा लीन हुने सामर्थ्य प्राप्त गरूँ जुन जीवनको सर्वोच्च लक्ष्य हो। यस्तै प्रकारको असमञ्जस तथा छटपटिएको समयमा एकदिन श्रीमालीज्यूसँग भेट भयो। उहाँको ज्ञान तथा प्राणायामका क्रियाहरुद्वारा फाइदा अनि शान्तिको अनुभव हुन थाल्यो। मेरो अनुरोधमा एकदिन गुरुदेव स्वयंले नै भन्नुभयो अब तिमी त्यस स्थितिमा पुगेकी छौ जब शक्तिपातको माध्यमबाट तिम्रो चित्तलाई परमानन्दमा लीन गर्न सकिन्छ। शक्तिपात गर्ने दिन म बिहानैदेखि नै भोकै थिएँ। प्रातःस्नान आदिद्वारा निवृत्त भई गुरु पूजा तथा इष्ट पूजा समाप्त गरी गुरुदेवको अगाडि आसनमा बसेँ। मेरो अगाडि गुरुदेव हुनुहुन्थ्यो तर त्यसबेला यस्तो महसुस भयो कि कुनै विद्युत स्फुलिङ्ग मेरो सामु उभिएको छ। गुरुदेवको सम्पूर्ण शरीर तेजले रन्केको थियो। चाहेर पनि मैले उहाँको अनुहारमा हेर्न सकिरहेकी थिइँन। गुरुदेवका दुवै हात माथि आकाशतिर उठेका थिए र म लगभग एक फुटको दूरीमा थिएँ। मैले मन्द-मन्द विद्युत् प्रवाह अनुभव गरिरहेकी थिएँ। देख्दादेख्दै मेरो सम्पूर्ण शरीर रननन तात्न थाल्यो। यत्तिकैमा गुरुदेवका दुवै हात मेरो शिरमाथि स्थिर हुन पुगे। मेरो मुखबाट ॐकारको ध्वनि दीर्घ घण्टनाद गर्दै तार स्वरले उच्चारण गर्दै गर्दै मूर्धा (शिरको माथिल्लो भाग) लाई छुन पुग्यो। अनि मेरो सुप्त चेतना जागृत भएर आकाशसमान निर्मलरुपमा विस्तृत भयो। सम्पूर्ण शरीर तथा आँखाअगाडि श्वेतवर्ण देखियो र प्राणको तेस्रो यात्राका साथै स्वतः पूरक प्राणायाम हुन पुग्यो। अनि त्यसैबेला यस्तो अनुभव भयो कि मानौँ मेरो प्राणले चेतनाको अमृत धारामा डुबुल्की लगाइरहेछ। यसपछि अत्यन्त शीतलताको अनुभव भयो र मेरो प्राणवायुले चन्द्रमण्डलको स्वरुप धारण गर्‍यो जुन अमृतसमान थियो, अनि त समाधि लागिहाल्यो। म एक अनिर्वचनीय आनन्दमा लीन भएँ। त्यसपछि मेरो समाधि लगभग छ घण्टापछि मात्र खुल्यो। सूर्य मध्याह्नभन्दा धेरै

पर पुगिसकेको थियो ।'

वास्तवमा योगीराज स्वामी सच्चिदानन्दज्यूका शिष्य परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज योगेश्वर हुनुहुन्छ । जहाँ समाजले आसनलाई नै योग ठानेको थियो, यस्तो बेला उहाँकै चरणको प्रतापबाट आज आएर योगको गहिराइ, गूढता, स्वर, शास्त्र आदिको बारेमा जान्ने मौका हामीले पाएका छौँ । यसरी योगको क्षेत्रमा पनि यस्तो नवीन खोजलाई गुरुदेवले मात्र प्रष्ट पार्नुभएको छ ।

## जडिबुटीहरू, चौसठ्ठी दिव्यौषधिहरुलाई प्रकाशमा ल्याउनुहुने डा. नारायण दत्त श्रीमालीज्यू

भारतवर्षमा कैयौँ यस्ता जडिबुटीहरु पाइन्छन् जसको जानकारी हामीलाई अहिलेसम्म हुन सकेको छैन । यसैले त हिमालयलाई स्वर्ग भनिन्छ । यसको गर्भमा सैकडौँ यस्ता जडिबुटीहरु पाइन्छन् जुन देवदुर्लभ मानिन्छन् । आयुर्वेदका ग्रन्थमा जुन चौँसठ्ठी जडिबुटीको वर्णन पाइन्छ तिनको प्रमाणिक जानकारी एवं आकार प्रकारको ज्ञान अहिलेसम्म दुर्लभ नै भएर रहेको छ । धेरै आयुर्वेदाचार्यहरुले यसको खोजी गरे पनि यो अहिलेसम्म सम्भव हुन सकेको छैन । श्रीरामायणको माध्यमबाट संजीवनीसँग सबै परिचित नै छन् । यसका अतिरिक्त तेलियाकन्द, मयूरकन्द आदि कैयौँ यस्ता दिव्य औषधिहरु पाइन्छन् जसको सेवन मात्रले जीवनको श्रेष्ठ स्थिति, श्रेष्ठ सिद्धिहरु प्राप्त हुन्छन् ।

केही वर्ष पहिले एकजना गुरुभाइलाई पूज्य गुरुदेवको कृपाले तेलियाकन्दका बारेमा जान्ने मौका प्राप्त भयो । उनी गुरुदेवसँग गाडीमा निस्के । बाटोमा साँझपख एउटा गेष्ट हाउसमा बसे । पूज्य गुरुदेवले उनलाई बताउनुभयो कि यहाँ तेलियाकन्द प्राप्त हुन सक्दछ र नजिकको जंगलमा विचरण गरेर गुरुदेवले उनलाई आज्ञा दिनुभएर एउटा लामो डोरी, खन्नका लागि कोदालो आदि मगाउनुभयो । गुरुदेवको निर्देशनमा एउटो सानो बिरुवाको चारैतिरको माटोलाई खनेर पन्छाइयो । त्यस बिरुवाको डाँठमा डोरीले बाँधेर एउटा रुखमा चढियो । डोरीको दुई तीन झट्काले त्यो बिरुवा उखेलियो । त्यहाँको सम्पूर्ण धर्ती तेलको धाराले तर भइरहेको थियो । तब त्यहाँ एउटा सर्प निस्कियो । केही नदेखेर उसले जोडजोडले कोदालोमा प्रहार गर्न लाग्यो र उसले त्यहीँ प्राण त्याग्यो । त्यस कोदालोलाई हेर्दा यस्तो लाग्दथ्यो कि यदि त्यहाँ कुनै व्यक्ति भएको भए त्यो समाप्त हुन एकछिन पनि लाग्दैन थियो ।

पूज्य गुरुदेवको कृपाले वाराणसीका एक ब्राह्मण दीक्षित परिवारमा जन्मेका श्री किशोरले तेलियाकन्द प्राप्त गरे र त्यसबाट उनले दश ग्राम पारोलाई शुद्ध सुनमा परिवर्तन गरेर देखाएका थिए ।

दीर्घजीवी हुनका लागि यो कुरा आवश्यक हुन्छ कि हाम्रो शरीरमा जति कोशिकाहरु छन् ती लामो समयसम्म पनि असक्त नहुन्, र आज वैज्ञानिकहरुको मान्यता पनि यो छ कि यदि कोशिकाहरुमा हुने परिवर्तनलाई मन्द गर्न सकियो तथा यिनलाई स्वस्थ र पुष्ट बनाउन सकियो भने व्यक्ति रोगरहित र दीर्घजीवी हुन सक्छ । केही समयअघि जापानबाट डा. माकीचीको नेतृत्वमा एउटा टोली दीर्घजीवी हुने उपाय खोज्नका लागि भारत पुगे को थियो । उनीहरुको लक्ष्य मयूरकन्द खोज्नु थियो किनकि आयुर्वेदका अनुसार यो दीर्घजीवनको रहस्य हो । यस टोलीले भारतीय आयुर्वेद विशेषज्ञहरुसँग मिलेर ५ महिनासम्म हिमालयमा मयूरकन्द पत्ता लगाउन लागीपर्‍यो । पछि जब उनीहरुले जोधपुर आएर पूज्य सद्‌गुरुदेवसँग भेट गरे, तब सद्‌गुरुदेवबाट उनीहरुलाई मयूरकन्दका सम्बन्धमा विशेष जानकारी मिल्यो । यसको बोटका लक्षणहरु के-के हुन्छन्, कुन स्थानमा यसलाई प्राप्त गर्न सकिन्छ आदि सम्बन्धमा प्रामाणिक एवं विस्तृत जानकारी प्राप्त भयो ।

वास्तवमा नै सद्‌गुरुदेवलाई हिमालयको कुना कन्दरा तथा त्यहाँ हुने वनस्पतिहरुको सम्पूर्ण ज्ञान छ । सद्‌गुरुदेवले लुप्त हुन लागेका औषधिहरुको रक्षाका लागि नैनीतालनजिकै एक फार्म बनाएर त्यसमा यी दुर्लभ जडिबुटीहरु लगाउनुभएको छ जसबाट आगामी समयमा यिनको विकास होस् । यी जडिबुटीहरुको प्रयोगबाट रोग निवारण मात्र हुँदैन अपितु यिनीहरुको विशेष योगको सेवनबाट सिद्धिहरुको प्राप्ति पनि सम्भव छ । परमपूज्य सद्‌गुरुदेवबाट यस सम्बन्धमा ज्ञान प्राप्त गरेर अद्वितीयता प्राप्त गर्न सकिन्छ । क्रमश:

जय गुरुदेव !

**आत्मीय पाठकवर्ग, गुरुको महिमा र महत्त्वको बारेमा शास्त्रले उल्लेख गरेका विषयहरूलाई जनसमक्ष उजागर गर्दै गुरुप्रतिको सच्चा भाव र भक्ति जागृत गर्ने उद्देश्यले यस स्तम्भअन्तर्गत अर्थसहित प्रकाशित गर्दै आइरहेका छौँ ।**

**गुरुरेको हि जानाति**
**स्वरुपं देवमव्ययम् ।**
**तज्ज्ञानं यत्प्रसादेन**
**नान्यथा शास्त्र कोटिभिः ॥१८३॥**

भावार्थ : गुरुलाई मात्र त्यस परम तत्त्व परमात्माको स्वरुप थाहा छ । गुरुको कृपाले नै परमात्माको सम्यक् बोध हुन्छ, अन्यथा करोडौं शास्त्रहरुको अध्ययनले पनि आत्मज्ञान प्राप्तिको सम्भावना हुँदैन । शास्त्रहरुबाट तर्कमय ज्ञान प्राप्त हुन सक्छ, सद्ज्ञान त केवल जीवित-जाग्रत गुरुबाट नै प्राप्त हुन सक्छ । यस्ता गुरु जीवनमा अनन्त पुण्यले मात्र प्राप्त हुन्छन्, जसलाई प्राप्त गरेर शिष्य कृतार्थ हुन्छ ।

**न जानन्ति परं तत्त्वं**
**गुरुदीक्षा पराङ्मुखाः ।**
**भ्रान्ताः पशुसमा ह्येताः**
**स्वपरिज्ञान वर्जिताः ॥१८४॥**

भावार्थ : गुरु दीक्षाबिना परम तत्त्वलाई जान्न सकिँदैन र परम तत्त्वलाई नजानुञ्जेल मानिस भ्रान्त पशुसमान हुन्छ । दीक्षाको तात्पर्य हो– पशुत्वबाट मानवत्व र मानवत्वबाट देवत्वतर्फ अग्रसर हुने क्रिया । दीक्षा नै यस्तो प्रक्रिया हो जसको माध्यमबाट गुरुले आफ्नो तपस्यांश शिष्यलाई प्रदान गरेर देवत्वतर्फ बढाउँछन्, शिष्यका जीवनका समस्त न्यूनताहरुलाई समाप्त पार्दै उसलाई पूर्णत्व दिनका लागि तत्पर हुन्छन् ।

**तस्मात् कैवल्य सिद्ध्यर्थं**
**गुरुमेव भजेत्प्रिये ।**
**गुरुं बिना न जानन्ति**
**मूढास्तत्परमं पदम् ॥१८५॥**

भावार्थ : कैवल्य अर्थात् मोक्ष प्राप्तिका लागि गुरुको सेवा, पूजा गर्नुपर्छ, गुरु बिना परम तत्त्व पाउन कठिन छ । अद्वैत स्वरुप यस तत्त्वको ज्ञान गुरुको माध्यमले मात्र सम्भव छ किनभने गुरु एउटा शक्तिपुञ्ज हुनुहुन्छ, ज्ञानस्वरुप हुनुहुन्छ, उहाँको कृपाले नै यो पद प्राप्त गर्न सकिन्छ । तसर्थ जीवनमा जस्तोसुकै प्रयास गरेर भए पनि उहाँलाई प्राप्त गर्नुपर्छ । गुरु प्राप्त हुनुभएमा जीवनको सफलता निश्चित हुन्छ नै, र शिष्यले उच्चतम भावभूमि प्राप्त गर्दछ ।

**भिद्यते हृदयग्रन्थि**
**श्छिद्यन्ते सर्वसंशयाः ।**
**क्षीयन्ते सर्वकर्माणि**
**गुरोः करुणया शिवे ॥१८६॥**

भावार्थ : गुरुको कृपा भएमा हृदयभित्रका गाँठाहरु स्वयं फुक्न थाल्छन्, सबै संशयहरु बिस्तार बिस्तारै नष्ट हुन्छन् तथा सम्पूर्ण कर्मभोगहरु क्षीण भएर जान्छन् । जीवका शुभ र अशुभ दुई प्रकारका कर्महरु हुन्छन् जसलाई उसले सुख र दुःखका रुपमा भोग गर्दछ, यिनै भोगहरुको लागि उसको जन्म, मृत्यु हुन्छ । सद्गुरु प्राप्त भएमा उहाँ शिष्यका सम्पूर्ण कर्महरुलाई सद्ज्ञानले समाप्त पारेर कर्म बन्धनबाट उसलाई मुक्त गरिदिनुहुन्छ ।

**कृताया गुरु भक्तेस्तु**
**वेद शास्त्रानुसारतः ।**
**मुच्यते पातकाद् घोराद्**
**गुरुभक्तो विशेषतः ॥१८७॥**

भावार्थ : वेद, शास्त्र र मर्यादानुसार गरिएको गुरुभक्तिले साधक घोर पापबाट मुक्त हुन्छ । गुरुको निरन्तर सेवाले शिष्यको मन पावन हुन्छ, यसैलाई निष्काम कर्म भनिन्छ । यही निष्काम सेवाबाट उसको हृदयमा ज्ञानको उत्पत्ति हुन्छ र त्यो ज्ञानले ती कर्मबन्धनकारक र शिष्यको बुद्धि मलीन पार्ने कर्महरुलाई भस्मसात् गरिदिन्छ । तसर्थ, अध्यात्मपथमा हिँड्नका लागि निष्काम कर्म नै अपेक्षित छ ।

**चित्तत्याग नियुक्तश्च**
**क्रोधगर्व विवर्जितः ।**
**द्वैतभाव परित्यागी**
**तस्य दीक्षा विधीयते ॥१८८॥**

भावार्थ : जुन साधकको मन त्यागयुक्त, शान्त, क्रोध र अहंकाररहित छ तथा भेदज्ञान शून्य छ उसैलाई दीक्षा प्राप्तिको अधिकार छ, ऊ नै दीक्षाको लागि सुपात्र हो । गुरुले शिष्यलाई शक्ति प्रदान गर्ने पावनतम प्रक्रिया दीक्षा हो । यस सौभाग्यलाई प्राप्त गर्नका निमित्त शिष्यमा उपरोक्त गुणहरु हुनु आवश्यक छ । तसर्थ, सद्गुरुले शिष्यलाई राम्ररी परीक्षण गर्नुहोस् र शिष्य उपरोक्त गुणहरुले युक्त भएमा मात्र दीक्षा प्रदान गर्नुहोस् । जय गुरुदेव !

## सद्गुरुदेव प्रवचनांश

*यस स्तम्भअन्तर्गत परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूले आफ्नो अवतरणकालमा विभिन्न समयमा विभिन्न विषयमा दिनुभएको प्रवचनलाई धारावाहिकरूपमा प्रस्तुत गर्ने क्रममा 'अकथ कहानी प्रित की' विषयको प्रवचनलाई अनुवाद गरी प्रकाशन गरिएको छ ।*

# विरहिनीको प्रेम

अरुले केही भन्लान्... म केही हुँ, त्यसैले त उनीहरुले भन्छन् । होइन भने त एउटा बेकारजस्तो जीवन मैले बाँच्नुपर्छ, तब त्यसको अर्थ नै के रहला र ? त्यो त एउटा गएज्रुग्रेको जीवन हुनेछ । त्यस जीवनमा कुनै रस, आनन्द नै हुने छैन ।

अनि जीवनको अन्तिम क्षणमा जब मृत्यु मेरो समीप, मेरो शिरानीमा उभिएको हुनेछ तब आफ्नो पूरै जीवनलाई नियाल्दा मसँग के पूँजी बाँकी होला ? यदि मैले आफ्नो जीवनको उच्छ्वास कसैलाई दिएकै छैन भने फेरि जीवनको अर्थ नै के रहन्छ र ? यदि मेरो शरीर सुकेर सिन्का भएको छैन भने त्यो जीवनको तात्पर्य नै के हुन्छ र ? किनकि जीवन त यस्तो हुनुपर्छ जसमा एक छिन पनि आराम नहोस्, एक छिन पनि ऊबिना रहने कल्पना नहोस् ।

मारग जोवे विरहिनी चितवे पिय की ओर,  
सुन्दर जियरे झक नहीं कल न परत निस भोर ।

उनी प्रत्येक क्षण त्यो बाटो हेरिरहन्छिन् जहाँबाट उनको प्रेमी आउँदैछ । दिन, महिना बित्छन्, वर्ष पनि बित्छन् तैपनि उनीको प्रतीक्षा भने सकिँदैन । उनी प्रतीक्षा गर्दै रहन्छिन्, उनको मनमा कुनै शान्ति हुँदैन, उनको मनमा अरू कुनै विम्ब, अरू कुनै विचार हुँदैन । उनलाई अन्य कुनै विचारको आवश्यकता पनि छैन किनकि म साह्रै एक्लिएकी छु, म एक्लै छट्पटाइरहेकी छु, एक रात काट्न पनि यति मुश्किल भएको छ भने जीवन कसरी काट्ने ? तैपनि म सारा जीवन बिताउन तयार छु ।

दुर्भर रहनि बिहाये अकेली सेजरी,  
जिनके संग न पीव बिरहिनी सेजरी ।

बिछ्यौना त छ, तर कठिन छ त्यसमा पल्टेर रात काट्न... धेरै मुश्किल छ । जसको साथमा प्रिय छैनन्, उनी रातभरि कति छटपटाउँछिन् होली, यो सोचनीय कुरा छ । विरह भरिएको यो रात यदि आउँछ भने आएर जान्छ पनि, त्यसैले मलाई त्यसको त कुनै पीर छैन, तर–

सुन्दर विरहिन मरी रही कहूं न पहिये जीव,  
अमृतपान कराइके फेरि जिवावे पीव ।

अब उनलाई कसले सम्झाउला, उनलाई कसले बताउला कि उनी मर्दैछिन्... र आएर उनलाई हौसला देला... कसरी जीवित रहलिन्... उनको छट्पटीलाई कसले कम गर्ला ?

केवल प्रेमी आएर नै उनलाई अमृतपान गराउन

सक्दछन्, उनलाई जीवन दिन सक्छन्, फेरि शीतल हावा बग्न सक्दछ, फेरि वसन्त ऋतु आएर अँगालिन सक्छ, फेरि तारागण स्वयं घुंघरु बनेर पाउमा नृत्यरत हुन सक्छन्... यो सबै तब मात्र हुन सक्छ जब प्रेमी अगाडि होस्, जब उनी मलाई प्राप्त होऊन्, जब म केही बेर उनीसामु बसूँ ।

बिरहा दुखदायी लग्यो मारे ऐंठ मरोरि,
सुन्दर बिरहिन क्यों जिये सब तन लियो निचोरि ।

यो विरह साह्रै दु:खदायी छ किनकि यसले सारा शरीरलाई निचोरेर सिध्याइदिन्छ । अब यो शरीर जिउँदो कसरी रहन सक्ला ? अब यसले कसरी सास फेर्न सक्ला ? विरहले त पूरै शरीरलाई निचोरेको छ । अब यो केवल हड्डीहरुको ढाँचा मात्र रहन गएको छ । आँखा भित्र धसिएको छ र केवल उसको प्रतीक्षामा टोलाइरहेको छ, किनकि अब त केवल प्रतीक्षा... र केवल प्रतीक्षा मात्र बाँकी छ ।

सुन्दर बिरहिन अधजरी दु:ख कहे मुख रोई,
जरि बरि के भस्मी हुई धुआं निकसे कोई ।

र, यो यस्तो आगो हो यसले जलाउन त जलाउँछ, तर धूवाँ निस्कँदैन । दाउरामाथिको शरीर जल्दा मानिसहरुलाई महसुस त हुन्छ कि शरीर जलेको छ... तर यसमा जल्नु त छँदैछ, जलेर खरानी हुन पनि पाइँदैन, भित्रैभित्रै निस्सासिनु मात्रै हुन्छ । यो दु:ख, यो वेदना म अरू कसैलाई बताउन पनि त सक्दिन ।

सब कोई रलिया करे आयो सरस बसन्त,
सुन्दर बिरहिन अनमनी जाके घर नहीं कंत ।

प्रेमी नै घरमा छैनन् भने त फेरि वसन्त अनि ऋतुराजको के अर्थ ? फेरि यो महल, घर अनि बिछ्यौनाको के काम ? सबै बेकार छन्– जब प्रेमी नै घरमा छैनन् भने, जब उनीसँग मिलन नै भएको छैन भने । अब त केवल यो गोरेटोमा हिँड्दाहिँड्दै पर्खाइको एउटा भूत चढेको (पागलपन आएको) छ । महसुस हुन लागेको छ कि अब शायद छिट्टै नै यो बाटो पार गर्नेछु ।

सांई तूं ही तूं करो क्यों नहीं दरस दिखाव,
सुन्दर बिरहिन यों कहें ज्योंही त्योंही आव ।

तिमी जसरी हुन्छ, जे गरेर हुन्छ, अब त मेरो सामु आऊ । म त केही पनि गर्न सक्दिन, म तिमीलाई कुनै उपाय पनि बताउन सक्दिन, तर तिमी जसरी पनि आउनुपर्छ... आउनैपर्छ किनकि अब म सहन सक्दिन । अब कि त कालले मलाई लैजाला अथवा लगेन भने मैले तिमीलाई हेर्न पाउनेछु । यदि काल पहिले आएमा मनमा एउटा पीडा अवश्य रहन जाला, किनकि मलाई त यस कुराको ज्ञान छँदैछैन कि मैले तिमीलाई कसरी रिझाऊँ, कसरी खुशी पारूँ, कसरी तिमीलाई आफ्नो समीप बोलाऊँ, मलाई यो जुक्ति आउँदैन ।

जिस विधि पिव रिझाइये सो विधि जानी नांहि,
जोबन जाय उतावला सुन्दर यह दुख मांहि ।

मलाई यस कुराको दु:ख छ कि एक-एक क्षण बित्दै गइरहेको छ । दु:ख यस कुराको छ कि जुन चीज मैले तिमीलाई उपहार दिन खोजिरहेकी छु, त्यो कसरी दिऊँ ? जब तिमी आउनेछौ तब यी सुन्दर आँखा रहने छैनन्, यो यौवन रहने छैन, यो सौन्दर्य रहने छैन, यी सबै चीजको अन्त्य भइसक्नेछ... तब तिमी भेटियौ भने पनि मैले के भेट गर्न सक्छु र ? अब त केवल एउटै विचार बाँकी छ–

पिउ मेरा अति लाडला, रुप बहुत तुझ मांहि,
तुझको राखू नयन में पलक उघारूं नाहि ।

तिमी मलाई असाध्यै प्रिय छौ, तिमी अत्यन्तै स्वरुपवान् छौ, तिम्रो मुस्कान पनि आफैमा अद्वितीय छ । तिम्रो छवि मेरो आँखामा बसेको छ । अब म आँखा खोल्न पनि चाहन्न, एक क्षण पनि केही हेर्न चाहन्न । आँखा खोल्ने बित्तिकै तिमी निस्किएर गयौ भने ? तिमीबाट अलग रहने कल्पना पनि आफैमा अत्यन्तै दु:खदायी छ ।

सुन्दर बिगसे विरहिनी मन में भयो उछाह,
फूल बिछाऊँ सेज, की आज पधारे नाह ।

यस्तो लागिरहेको छ कि आज शायद तिमी आउँदैछौ, यस्तो लागिरहेको छ कि शायद आज तिमीसँग मेरो भेट हुनेछ, र यही आशाका साथ मैले तिम्रो आसनलाई फूलहरुले सजाइरहेकी छु । मलाई थाहा छ तिमी आउँदैछौ किनकि अब म विरहलाई अरु सहन सक्दिन । तिम्रो आगमनको पदचापबाट नै मेरो जीवन आनन्दमय भएको छ ।

वास्तवमा नै प्रभुलाई पाउनको लागि विरहिणी बन्नैपर्दछ । शिष्य, साधक वा भक्त विरहिणी भएर नै आफ्नो गुरुलाई, प्रभुलाई, ईश्वरलाई प्राप्त गर्दछ, गुरुसँग एकाकार हुन सक्दछ, गुरुमा लीन हुन सक्दछ । जब शिष्यले आफैलाई एउटी विरहिणी सम्झन्छ तब मनमा एउटा उत्साह हुन्छ, उमंग हुन्छ, एउटा पीडा हुन्छ... र त्यही पीडाको सहाराबाट ऊ आफ्नो गुरुमा लीन हुन जान्छ ।

–यस्तै प्रतीक्षा, यस्तै पीडा, यस्तै वेदना तपाईंलाई प्राप्त होस्, म तपाईंलाई यही आशीर्वाद दिन्छु ।

समाप्त ।

# आफ्नो हात आफै हेरौँ

यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार मानिसको हातमा रहेका विभिन्न पर्वतहरूको बारेमा हामीले चर्चा गर्दै आइरहेका छौँ। प्रत्येक पर्वतको आफ्नै महत्त्व र स्वभाव रहेको हुन्छ जसअनुसार यस अंकमा हत्केलाका चिह्नहरूको फलको बारेमा चर्चा गरिएको छ। यो लेख पढेर तपाईं पनि आफ्नो हातको स्थितिबारे अध्ययन गरी आफ्नो स्वभावबारे जान्न सक्नुहुन्छ। यस स्तम्भको बारेमा कुनै प्रतिक्रिया भए हामीलाई पठाउन सक्नुहुनेछ।

**६. मंगल पर्वत :**

एउटा रेखा: साहस। धेरै रेखाहरु: हिंसात्मक प्रवृत्ति। आपसमा काटिएका रेखाहरु: युद्ध भावना तथा हिंसापूर्ण विचार। विन्दु: युद्धमा शारीरिक क्षति। क्रस: युद्धमा मृत्यु। नक्षत्र: सेनामा विशेष उच्च पद प्राप्ति। वर्ग: आवश्यकताभन्दा धेरै क्रोधको भावना। वृत्त: चतुर, नीति निपुण। त्रिकोण: योजनाबद्ध कार्य गर्ने। जाली: आत्महत्या। मङ्गल चिह्न: युद्ध भावनामा विकास। गुरु चिह्न: स्त्रीहरुलाई मोहित गर्ने। शनि चिह्न: कुटिल स्वभाव। सूर्य चिह्न: प्रदर्शन प्रियता। बुध चिह्न: आकस्मिक धन प्राप्ति। शुक्र चिह्न: प्रेमको क्षेत्रमा उग्रता। चन्द्र चिह्न: पागलपन।

**७. चन्द्र पर्वत :**

एउटा रेखा: कल्पनाको भावनाको विकास। धेरै रेखाहरु: सौन्दर्यप्रियता। आपसमा काटिएका रेखाहरु: चिन्ता। विन्दु: प्रेममा बारम्बार असफलता। क्रस: सामाजिक सम्मानमा न्यूनता। नक्षत्र: राजकीय सम्मान। वर्ग: विशेष धन प्राप्ति। वृत्त: जलमा डुब्नाले मृत्यु। त्रकोण: राष्ट्रव्यापी सम्मान प्राप्त गर्ने कवि। जाली: निराशा। चन्द्र चिह्न: मूर्ख। गुरु चिह्न: साहसको बलमा अगाडि बढ्ने। शनि चिह्न: अन्धविश्वासी तथा अर्धपागल। सूर्य चिह्न: जुवाको प्रवृत्ति। शुक्र चिह्न: नवीन विचारहरुतर्फ प्रेरणा। मङ्गल चिह्न: पागलपन।

**८. राहु-केतु :**

एउटा रेखा: साहस। धेरै रेखाहरु: अत्यन्त क्रोधी। आपसमा काटिएका रेखाहरु: उत्तरदायी भावनाको कमी। विन्दु: हरेक कार्यमा सफलता। क्रस: मानहानि। नक्षत्र: युद्धसम्बन्धी कार्यमा विशेष सफलता। वर्ग: राज्य सम्मान। वृत्त: सेनामा अत्यन्त उच्च पद प्राप्ति। त्रिकोण: अतुलनीय धन प्राप्ति। जाली: दरिद्र जीवन। सूर्य चिह्न: कमजोरी। चन्द्र चिह्न: पागलपन। मंगल चिह्न: डाँका, हत्यारा। बुध चिह्न: निम्नस्तरीय कार्यहरुबाट धन लाभ। गुरु चिह्न: अधार्मिक। शुक्र चिह्न: निम्नस्तरीय स्त्रीहरुसँग प्रेम सम्पर्क। शनि चिह्न: प्रसिद्ध जालसाज।

**९. हर्षल :**

एउटा रेखा: विशेष सम्मान। धेरै रेखाहरु: बारम्बार विदेश यात्रा। आपसमा काटिएका रेखाहरु: वायुयान दुर्घटनामा मृत्यु। विन्दु: उच्चस्तरीय प्रसिद्धि। क्रस: विदेशमा रहन बाध्य हुनु। नक्षत्र: विदेशमा ख्याति। वर्ग: वैज्ञानिक कार्यमा रुचि। वृत्त: विशेष धन प्राप्ति। त्रिकोण: इन्जिनियरिङ्ग कार्यमा रुचि। जाली: आकस्मिक दुर्घटनाबाट मृत्यु। सूर्य चिह्न: विश्वप्रसिद्ध सम्मान। चन्द्र चिह्न: जीवनमा विशेष सफलता। मङ्गल चिह्न: सेनामा उच्च पद प्राप्ति। बुध चिह्न: आयात-निर्यातको व्यापार गर्ने। गुरु चिह्न: धार्मिक काव्यको रचना गर्ने। शुक्र: उच्चकोटिको प्रेम। शनि चिह्न: सफल राजनीतिज्ञ।

**१०. नेपच्यून :**

एउटा रेखा: समाजमा सफलता। धेरै रेखाहरु: सामाजिक कार्य गर्नाले सम्मान प्राप्ति। आपसमा काटिएका रेखाहरु: हरेक कार्यमा निराशा। विन्दु: न्यायप्रियता। क्रस: हत्या गर्ने भावनामा विकास। नक्षत्र: जल यात्रा।

वर्गः राष्ट्रिय स्तरको सम्मान । वृत्तः मानसिक कमजोरी । त्रिकोणः विदेशमा विवाह । जालीः जलबाट मृत्यु । सूर्य चिह्नः विशेष सफलता । चन्द्र चिह्नः तटवर्ती स्थानहरुमा व्यापारबाट लाभ । मङ्गल चिह्नः युद्ध शस्त्रको व्यापारमा सफलता । बुध चिह्नः अन्तर्राष्ट्रिय व्यापारी । गुरु चिह्नः सफल सामाजिक भावनाको विकास । शुक्रः सयभन्दा बढी स्त्रीहरुसँग रमण । शनि चिह्नः नपुंसकता ।

### ११. प्लुटो :

एउटा रेखाः जीवनमा पूर्ण उन्नति । धेरै रेखाहरुः समाजमा विशेष सम्मान । आपसमा काटिएका रेखाहरुः संन्यास भावनाको विकास । विन्दुः हरेक कार्यमा सफलता । क्रसः आत्महत्या । नक्षत्रः धार्मिक कार्यमा रुचि । वर्गः मूर्खता । वृत्तः शुभ कार्यहरुमा रुचि । त्रिकोणः धेरै कलाहरुमा सफलता । जालीः असफल जीवन । सूर्य चिह्नः विशेष सम्मान । चन्द्र चिह्नः जलमा डुब्नाले मृत्यु । मङ्गल चिह्नः धर्मान्धता । बुध चिह्नः व्यापारिक कार्यमा विशेष सफलता । गुरु चिह्नः समाजमा सम्माननीय स्थान प्राप्त हुनु । शुक्र चिह्नः सात्विक प्रेम । शनि चिह्नः तन्त्रविद्यामा रुचि ।

छोटकरीमा ऋणात्मक र धनात्मक पर्वतहरुको विवेचना पनि गरिन्छ । जुन तारीखमा जन्म हुन्छ, त्यस तारीखअनुसार पर्वतको फल उसको जीवनमा रहन्छ । धनात्मक पर्वत भएमा त्यस पर्वतका विशेषताहरु तथा ऋणात्मक पर्वत भएमा त्यस पर्वतबाट सम्बन्धित ग्रहको न्यूनता प्राप्त हुन्छ । साथसाथै, यहाँ ऋणात्मक पर्वत-विकासलाई पनि स्पष्ट गरिन्छ । यसबेला जन्म लिने व्यक्तिहरुको सम्बन्धित ग्रह पर्वत फल न्यूनतम हुन्छ ।

### ऋणात्मक पर्वत :

निम्न तारीखमा जन्म लिनेहरुमा सम्बन्धित ग्रहहरुको ऋणात्मक विकास रहन्छ–

ग्रह– जन्म तारीख (धनात्मक) ।
जन्म तारीख (ऋणात्मक) ॥

शुक्र– २० अप्रिलदेखि २० मे ।
२१ सेप्टेम्बरदेखि २० अक्टुबर ॥

मंगल– २१ मार्चदेखि २१ अप्रिल ।
२१ अक्टुबरदेखि २० नोभेम्बर ॥

गुरु– २१ नोभेम्बरदेखि ३० डिसेम्बर ।
१९ फेब्रुअरीदेखि २० मार्च ॥

शनि– २१ डिसेम्बरदेखि २० जनवरी ।
२१ जनवरीदेखि १८ फेब्रुअरी ।

सूर्य– २१ जुलाईदेखि २० अगस्ट ।
२१ मार्चदेखि २० अप्रिल ।

बुध– २१ मेदेखि २० जुन ।
२१ अगस्टदेखि २० सेप्टेम्बर ।

चन्द्र– २१ जुलाइदेखि २० अगस्ट ।
२१ जुलाइदेखि २० अगस्ट ।

क्रमशः

जय गुरुदेव !

## २०६६ आश्विन महिनामा पर्ने चाडपर्व

| मिति | चाडपर्व |
|---|---|
| आश्विन १ गते | **तान्त्रोक्त वगलामुखी हवन, तान्त्रोक्त महर्षि वेदव्यास हवन**, विश्वकर्मापूजा |
| आश्विन २ गते | सोह्र श्राद्ध समाप्त |
| आश्विन ३ गते | घटस्थापना, शारदीय नवरात्रि शुभारम्भ |
| आश्विन ५ गते | **दिव्य गुरु महोत्सव, श्री शिव गोरक्ष हवन** |
| आश्विन ६ गते | **तान्त्रोक्त वटुक भैरव हवन, तान्त्रोक्त गणपति हवन** |
| आश्विन ७ गते | **तान्त्रोक्त महालक्ष्मी हवन, तान्त्रोक्त विन्ध्यवासिनी हवन** |
| आश्विन ९ गते | फूलपाती |
| आश्विन १० गते | महाअष्टमी, गोरखकाली पूजा |
| आश्विन ११ गते | महानवमी |
| आश्विन १२ गते | विजयादशमी |
| आश्विन १४ गते | पापाङ्कुशा एकादशी |
| आश्विन १५ गते | प्रदोषव्रत |
| आश्विन १७ गते | कोजाग्रत पूर्णिमा |
| आश्विन १८ गते | कार्तिक स्नान, आकाशदीपदान शुरु |
| आश्विन २५ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| आश्विन २८ गते | रमा एकादशी |
| आश्विन २९ गते | प्रदोष व्रत |
| आश्विन ३० गते | कागतिहार, धन्वन्तरी जयन्ती |
| आश्विन ३१ गते | नरक चतुर्दशी, कुकुरतिहार, लक्ष्मीपूजा |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे-गुरु पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे-आरती**

# आश्विन महिनाको सूक्ष्म काल विवरण

**आदरणीय पाठकवृन्द, विभिन्न महिनाका विभिन्न बारहरुमा पर्ने कालहरुको जानकारी तथा सूक्ष्म काल निर्णयका सम्बन्धमा विगतका अङ्कहरूमा प्रकाशित गरिएको थियो। यस अंकमा आश्विन महिनामा पर्ने विभिन्न चारवटा कालहरुको पनि ५-५ मिनेटको अन्तरालको फलहरुलाई प्रस्तुत गरिएको छ जसलाई हेर्न सँगै दिइएको तालिकालाई आधार बनाउनु होला।**

## आश्विन महिनाको महेन्द्र काल

१ देखि ५ मिनेटसम्म : यात्राको दृष्टिबाट यस समयको विशेष महत्त्व छ, यस समयका अधिष्ठाता 'गणेश' हुन्। अत: गणेशको स्मरण गरेर यात्रा प्रारम्भ गर्नुपर्दछ। दूबो चपाउनु शुभ मानिएको छ।

६ देखि १० मिनेटसम्म : यात्रा, विजय कार्य, धन संग्रह, किनमेल र शुभ कार्यका लागि यो समय अनुकूल छ। यस समयका अधिष्ठाता 'ब्रह्मा' हुन्, पान खाएर कार्य प्रारम्भ गर्नु शुभ रहन्छ।

११ देखि १५ मिनेटसम्म : यात्रा, जुवा, हानि-लाभ, सट्टा, भाग्य परीक्षा, मित्रता, लाभदायक कार्य आदिका लागि यो समय उचित छ। यस समयका स्वामी 'कार्तवीर्यार्जुन' हुन्, दही खानु शुभ मानिएको छ।

१६ देखि २० मिनेटसम्म : यात्रा, विवाह, व्यापार कार्य, मित्रता, उन्नति कार्य आदिका लागि यस समयको छनौट गर्नुपर्दछ। यस समयका अधिष्ठात्रा 'मरुत' हुन्, तिल खानु शुभ मानिएको छ।

२१ देखि २५ मिनेटसम्म : यात्रा, शुभ कार्य, कुरा छिन्ने, विवाह, माङ्गलिक कार्य, व्यापारिक कार्य, जुवा आदिका लागि यो समय अनुकूल र शुभ छ। यस समयका देवता 'चन्द्र' हुन्, दही खानु शुभ मानिएको छ।

२६ देखि ३० मिनेटसम्म : व्यापार, सफलता, शिक्षा, खेल, प्रणय प्रसङ्ग, विवाह तथा यात्रा आदिका लागि यस समयलाई छनौट गर्नुपर्दछ। यस समयका देवता 'गौतम' हुन्, पान चपाएर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ।

३१ देखि ३५ मिनेटसम्म : शुभ कार्य एवं व्यापारका लागि सर्वथा अनुकूल छ। यस कालका स्वामी 'शिव' हुन्, कार्य प्रारम्भ गर्नुपूर्व धनियाँ खानु अनुकूल रहन्छ।

३६ देखि ४० मिनेटसम्म : व्यापार कार्यका लागि यो समयको छनौट विशेष शुभ रहन्छ, यस समयकी अधिष्ठात्री 'लक्ष्मी' हुन्, दूध प्रसाद खाएर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ।

४१ देखि ४५ मिनेटसम्म : भाग्योदय, चुनाव, परीक्षा दिने, सफलतासम्बन्धी कार्य, स्थिर कार्य, भाग्योदयका लागि यस समयको छनौट गर्नुपर्दछ। यस समयका स्वामी 'विष्णु' हुन्, चामल खाएर कार्य प्रारम्भ गर्नु विशेष शुभ मानिएको छ।

४६ देखि ५० मिनेटसम्म : उन्नति कार्य, विवाह, प्रणय, प्रेम प्रदर्शन, लाभ कार्य, खेल, यात्रा आदिका लागि यो समय शुभ छ। यस समयका अधिष्ठाता 'कामदेव' हुन्, मह खाएर कार्य प्रारम्भ गरियो भने विशेष शुभ रहन्छ।

५१ देखि ५५ मिनेटसम्म : कुनै पनि प्रकारको यात्रा एवं सफलताका लागि यो समय विशेष शुभ एवं अनुकूल छ। यस समयका देवता 'सूर्य' हुन्, सख्खर खाएर यात्रा अथवा कार्य प्रारम्भ गर्नुपर्दछ।

५६ देखि ६० मिनेटसम्म : कुनै पनि प्रकारको उन्नति, व्यापार, जागिर, यात्रा आदिका लागि यस समयलाई छनौट गर्नु शुभ मानिएको छ। यस समयकी अधिष्ठात्री 'गौरी' हुन्, हरिद्रा खानु शुभ मानिएको छ।

## आश्विन महिनाको अमृत काल

१ देखि ५ मिनेटसम्म : यात्राका लागि यो समय शुभ छ। यसका देवता 'गणपति' हुन्, सख्खरको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ।

६ देखि १० मिनेटसम्म : जुवा, व्यापार प्रारम्भ गर्न, कुनै पनि घर वा पसलको मुहूर्त आदिका लागि यो शुभ समय हो। यसका देवता 'विष्णु' हुन्, चिनी खानु शुभ हुन्छ।

११ देखि १५ मिनेटसम्म : कुनै पनि व्यापार कार्यका लागि यो समय शुभ छ। यसका देवता 'नृसिंह' हुन्, लड्डुको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ।

१६ देखि २० मिनेटसम्म : यात्रादिका लागि सर्वाधिक उपयुक्त समय छ। यस समयकी अधिष्ठात्री देवी 'सरस्वती' हुन्, मुगीको दाना चबाएर यात्रा प्रारम्भ गर्नु शुभ रहन्छ।

२१ देखि २५ मिनेटसम्म : जुवा, व्यापार, व्यवसायका लागि यात्रा, यज्ञ, पूजन, अनुष्ठान आदिका लागि यो समय शुभ छ। यस समयका देवता 'शिव' हुन्, चामलको प्रयोग

# आश्विन, कार्तिक, मंसिर र पौष महिनामा पर्ने विभिन्न कालहरू

| आइतबार | | सोमबार | | मंगलबार | | बुधबार | | बिहीबार | | शुक्रबार | | शनिबार | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| ***समय*** | ***काल*** | ***समय*** | ***काल*** | ***समय*** | ***काल*** | ***समय*** | ***काल*** | ***समय*** | ***काल*** | ***समय*** | ***काल*** | ***समय*** | ***काल*** |
| ६:००-७:३६बिहान | शून्य | ६:००-९:१२बिहान | अमृत | ६:००-७:३६बिहान | अमृत | ६:००-६:४८बिहान | शून्य | ६:००-६:४८बिहान | अमृत | ६:००-९:१२बिहान | वक्र | ६:००-७:३६बिहान | शून्य |
| ७:३६-१०:०० | अमृत | ९:१२-१०:४८ | महेन्द्र | ७:३६-१०:०० | वक्र | ६:४८-८:२४ | महेन्द्र | ६:४८-८:२४ | शून्य | ९:१२-१०:४८<br>*१०:३०-१२:००* | अमृत<br>*राहु* | ७:३६-९:१२<br>*९:००-१०:३०* | वक्र<br>*राहु* |
| १०:००-१२:२४ | वक्र | १०:४८-१:१२ | शून्य | १०:००-१०:४८ | अमृत | ८:२४-११:३६ | अमृत | ८:२४-१०:४८ | वक्र | १०:४८-११:३६<br>*१०:३०-१२:००* | शून्य<br>*राहु* | ९:१२-१०:४८<br>*९:००-१०:३०* | शून्य<br>*राहु* |
| १२:२४-२:४८ | अमृत | १:१२-३:३६ | अमृत | १०:४८-१२:२४ | शून्य | ११:३६-२:००<br>*१२:००-१:३०* | वक्र<br>*राहु* | १०:४८-१२:२४ | अमृत | ११:३६-१२:२४<br>*१०:३०-१२:००* | अमृत<br>*राहु* | १०:४८-२:०० | अमृत |
| २:४८-४:२४ | वक्र | ३:३६-६:०० | महेन्द्र | १२:२४-२:४८ | महेन्द्र | २:००-५:१२ | शून्य | १२:२४-१:१२ | शून्य | १२:२४-२:०० | वक्र | २:००-२:४८ | शून्य |
| ४:२४-५:१२<br>*४:३०-६:००* | अमृत<br>*राहु* | ६:००-८:२४रात्रि | वक्र | २:४८-५:१२<br>*३:००-४:३०* | शून्य<br>*राहु* | ५:१२-६:०० | वक्र | १:१२-२:४८<br>*१:३०-३:००* | वक्र<br>*राहु* | २:००-४:२४ | अमृत | २:४८-४:२४ | वक्र |
| ५:१२-६:००<br>*४:३०-६:००* | शून्य<br>*राहु* | ८:२४-११:३६ | अमृत | ५:१२-६:०० | वक्र | ६:००-६:४८रात्रि | शून्य | २:४८-५:१२<br>*१:३०-३:००* | अमृत<br>*राहु* | ४:२४-६:०० | महेन्द्र | ४:२४-५:१२ | शून्य |
| ६:००-७:३६ रात्रि | शून्य | ११:३६-२:०० | वक्र | ६:००-८:२४रात्रि | वक्र | ६:४८-१०:४८ | अमृत | ५:१२-६:०० | महेन्द्र | ६:००-७:३६रात्रि | वक्र | ५:१२-६:०० | महेन्द्र |
| ७:३६-९:१२ | अमृत | २:००-३:३६ | अमृत | ८:२४-११:३६ | अमृत | १०:४८-२:०० | वक्र | ६:००-७:३६रात्रि | शून्य | ७:३६-८:२४ | शून्य | ६:००-६:४८रात्रि | शून्य |
| ९:१२-११:३६ | वक्र | ३:३६-४:२४ | शून्य | ११:३६-२:०० | वक्र | २:००-४:२४ | अमृत | ७:३६-९:१२ | वक्र | ८:२४-१०:४८ | अमृत | ६:४८-८:२४ | वक्र |
| ११:३६-२:०० | अमृत | ४:२४-६:०० | वक्र | २:००-३:३६ | अमृत | ४:२४-५:१२ | शून्य | ९:१२-१०:०० | शून्य | १०:४८-१:१२ | शून्य | ८:२४-१०:४८ | अमृत |
| २:००-३:३६ | शून्य | | | ३:३६-४:२४ | शून्य | ५:१२-६:०० | वक्र | १०:००-१२:२४ | अमृत | १:१२-२:०० | महेन्द्र | १०:४८-१२:२४ | वक्र |
| ३:३६-६:०० | वक्र | | | ४:२४-६:०० | वक्र | | | १२:२४-२:४८ | वक्र | २:००-२:४८ | शून्य | १२:२४-२:४८ | अमृत |
| | | | | | | | | २:४८-३:३६ | शून्य | २:४८-६:०० | वक्र | २:४८-४:२४ | वक्र |
| | | | | | | | | ३:३६-६:०० | वक्र | | | ४:२४-६:०० | अमृत |

परमपूज्य सद्गुरुदेव डा.नारायणदत्त श्रीमाली (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज)द्वारा रचित ***'ज्योतिष और काल निर्णय'*** ग्रन्थमा आधारित ।

**महेन्द्रकाल– सर्वश्रेष्ठ, अमृतकाल– श्रेष्ठ, वक्रकाल– सामान्य, शून्यकाल– निकृष्ट । शुभकालमा राहुकाल पनि मिसिएको छ भने त्यो समय पनि आफैँ अशुभ हुन्छ ।**

सूक्ष्म काल विवेचना गर्नुपर्दा– सर्वप्रथम कुन बार हो र कति बजेको विवेचना गर्नु छ, त्यसअनुसार कुन काल परेको छ (महेन्द्रकाल, अमृतकाल, वक्रकाल वा शून्यकाल) त्यो तालिका हेरेर पत्ता लगाउनु पर्दछ । उदाहरणका लागि २०६६ आश्विन ५ गते सोमबार बिहान ७:१३ बजेको सूक्ष्म विवेचना गरौँ । सोमबार प्रात: ६:०० देखि ९:१२ बजेसम्म अमृतकालको समय छ । हाम्रो समय अमृतकालमा परेको छ । अब हाम्रो समय ७:१३ बाट हाम्रो काल शुरु भएको समय ६:०० घटाऔं । बाँकी रह्यो १:१३ अर्थात् १ घण्टा १३ मिनेट । अब घण्टा जति भए पनि त्यसलाई छोडिदिएर मिनेटमा मात्र विचार गर्नुहोस्- १३ मिनेट । त्यसपछि आश्विन महिनाको अमृतकालमा १३ मिनेट कहाँ पर्दछ हेर्नुहोस् । त्यहाँ लेखिएको छ– **११ देखि १५ मिनेटसम्म : कुनै पनि व्यापार कार्यका लागि यो समय शुभ छ । यसका देवता 'नृसिंह' हुन्, लड्डुको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।** अब यहाँ लेखिएअनुसार गर्न सक्नुहुनेछ ।

गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

२६ देखि ३० मिनेटसम्म : यात्रा, महत्त्वपूर्ण र उन्नति कार्यहरूका लागि यस समयको छनौट राम्रो हुन्छ । यस समयका देवता 'रुद्र' हुन्, कार्य प्रारम्भ गर्नु अगाडि सख्खरको प्रयोग शुभ मानिएको छ ।

३१ देखि ३५ मिनेटसम्म : परीक्षा, चुनाव, अन्तर्वार्ता तथा यात्रा आदिका लागि समय शुभ छ । यस समयका अधिष्ठाता 'चन्द्र' हुन्, दही खाँदा शुभ हुन्छ ।

३६ देखि ४० मिनेटसम्म : जुवा, व्यापार, यात्रा आदिका लागि समय उपयुक्त छ । यस समयका देव 'शनि' हुन्, तिल खाएर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

४१ देखि ४५ मिनेटसम्म : यात्रा, स्थायित्वसम्बन्धी कार्य, व्यापार प्रारम्भ मुहूर्त आदिका लागि यस समयको छनौट शुभ छ । यस समयकी देवी 'लक्ष्मी' हुन्, दूध प्रसाद खाएर गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

४६ देखि ५० मिनेटसम्म : यात्रा, व्यापार, उन्नति कार्य एवं समस्त शुभ कार्यका लागि यो समय उपयुक्त छ । यसका प्रधान देव 'विष्णु' हुन्, मीठो पकवान खानु शुभ मानिएको छ ।

५१ देखि ५५ मिनेटसम्म : विवाह, कुरा छिन्ने आदिका लागि प्रस्थान, अन्तर्वार्ता, मुद्दा मामिला आदिका लागि यो समय शुभ छ । यस समयका अधिष्ठाता 'हनुमान्' हुन्, सख्खर भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

५६ देखि ६० मिनेटसम्म : स्थायी कार्य, व्यापार, उन्नति तथा यात्रादिका लागि शुभ समय छ । यस समयकी अधिष्ठात्री 'गौरी' हुन्, दूबो चपाउनु शुभ रहन्छ ।

## आश्विन महिनाको वक्र काल

१ देखि ५ मिनेटसम्म : प्रेम प्रदर्शन, प्रणय आदिका लागि यस समयको छनौट ठीक रहन्छ । यस समयका प्रधान देव 'कामदेव' हुन्, मह खाएर जानुहोस् ।

६ देखि १० मिनेटसम्म : यात्रादिका लागि यो समय अनुकूल छ । 'मरुत' यसका देव हुन् । सख्खर खाएर जाँदा राम्रो हुन्छ ।

११ देखि १५ मिनेटसम्म : प्रेम, वाद्य, जुवा आदिको लागि शुभ समय छ । यसका प्रधान देव 'पुष्पधन्वा' हुन्, मह खाँदा शुभ हुन्छ ।

१६ देखि २० मिनेटसम्म : जुवा खेल्नको लागि उपयुक्त समय । यसका प्रधान देव 'वरुण' हुन्, दही खाएर यात्रा गर्नुहोस् ।

२१ देखि २५ मिनेटसम्म : मित्रता बढाउन, अधिकार प्राप्त गर्न, स्थानान्तरण आदिका लागि यो समय उपयुक्त छ । यसका प्रधान देव 'सूर्य' हुन्, जीराको प्रयोग गरियो भने विशेष अनुकूल रहन्छ ।

२६ देखि ३० मिनेटसम्म : जुवा, दौड, सिनेमा, व्यापार आदिका लागि यो उपयुक्त समय हो । यसका प्रधान देव 'शुक्राचार्य' हुन् । मीठो पकवान खाएर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

३१ देखि ३५ मिनेटसम्म : जासूसी, भेद ज्ञात गर्ने, सामुन्ने भएको व्यक्तिलाई प्रभावित गर्ने आदिका लागि यो समय ठीक छ । यसका प्रधान देव 'वात' हुन्, चामल खाएर जानुहोस् ।

३६ देखि ४० मिनेटसम्म : व्यापारादि कार्यहरूका लागि यो शुभ समय छ । यसका प्रधान देव 'गुरु' हुन्, लड्डुको प्रयोग शुभ मानिएको छ ।

४१ देखि ४५ मिनेटसम्म : व्यापार आदिका लागि अपेक्षाकृत ठीक छ । प्रारम्भमा विलम्ब र पछि सिद्धि । यसका प्रधान देव 'गरुड' हुन्, हरिद्रा खाएर कार्य प्रारम्भ गरियो भने शुभ रहन्छ ।

४६ देखि ५० मिनेटसम्म : यात्राका लागि केही बाधकारक तर अन्त्यमा ठीक । यसका प्रधान देव 'अग्नि' हुन्, तोरी चपाएर कार्य गर्दा उत्तम रहन्छ ।

५१ देखि ५५ मिनेटसम्म : व्यापार, व्यवसायका लागि सामान्य अनुकूल । यसका प्रधान देव 'चन्द्रमा' हुन्, दही खानु शुभ मानिएको छ ।

५६ देखि ६० मिनेटसम्म : यात्रा आदिका लागि विशेष अनुकूल छ । यसका प्रधान देव 'गणपति' हुन्, सख्खरको प्रयोग शुभ मानिएको छ ।

## आश्विन महिनाको शून्य काल

१ देखि ५ मिनेटसम्म : जुवा खेल्नका लागि शुभ, यस समयका देवता 'काल' हुन्, मह खाएर गइयो भने अनुकूल ।

६ देखि १० मिनेटसम्म : जुवा, मद्य, घोडा दौड, सौन्दर्य प्रसाधन सामग्री बिक्री, व्यापार आदिको लागि अनुकूल । प्रधान देवता 'विश्वकर्मा' हुनुहुन्छ, सख्खर र

घिउ खानु शुभ ।

११ देखि १५ मिनेटसम्म : शुभ, यात्रादिका लागि अनुकूल, प्रधान देवता 'ब्रह्मा'लाई स्मरण गर्नुहोस्, र दही भक्षण शुभ ।

१६ देखि २० मिनेटसम्म : कार्यको प्रारम्भमा तनावहरू, तर पछि स्थितिमा सुधार, प्रधान देव 'अग्नि'को स्मरण र तिल खानु शुभ ।

२१ देखि २५ मिनेटसम्म : प्रणय प्रसङ्ग, मद्यपान, जुवा, घोडादौड आदिका लागि अनुकूल । 'शुक्राचार्य'को स्मरण गर्नुहोस् र फल खाएर जानुहोस् ।

२६ देखि ३० मिनेटसम्म: प्रत्येक कार्य अथवा यात्रादिका लागि प्रारम्भमा बाधाकारक तर पछि शुभ । तर पनि 'लक्ष्मी'लाई स्मरण गर्नुहोस् । चामल चपाउनु शुभ ।

३१ देखि ३५ मिनेटसम्म : बाधाकारक समय, तर मुद्दा मामिला आदिका लागि शुभ । 'हनुमान्'लाई स्मरण गरेर, सख्खर, घिउ खाएर जाँदा भने अनुकूल ।

३६ देखि ४० मिनेटसम्म : प्रत्येक कार्यका लागि सामान्य अनुकूल । प्रधान देवता 'मकरध्वज'को स्मरण गर्नुहोस् । तोरी खानु शुभ ।

४१ देखि ४५ मिनेटसम्म : प्रत्येक कार्यका लागि अशुभ एवं तनावपूर्ण, तर पनि 'गणपति'लाई स्मरण गरेर र सख्खर खाएर कार्य प्रारम्भ गरिन्छ भने शुभ ।

४६ देखि ५० मिनेटसम्म : प्रत्येक कार्यका लागि व्यवधानपूर्ण, तर 'गौरी'लाई स्मरण गरेर र दही खाएर कार्य प्रारम्भ गर्दा केही अनुकूलता ।

५१ देखि ५५ मिनेटसम्म : यात्रादिका लागि विपरीत समय, शुभ कार्यहरूमा वर्जित, 'चित्रगुप्त'लाई स्मरण गर्नुहोस् तथा फूल चपाएर कार्य प्रारम्भ गरियो भने केही अनुकूलता ।

५६ देखि ६० मिनेटसम्म : प्रत्येक कार्यका लागि अशुभ एवं बाधाकारक । 'हिडिम्बा'को ध्यान गर्नुहोस् । घिउको भक्षण शुभ । जय गुरुदेव !

विजयादशमी तथा शुभ दीपावली २०६६ को शुभ उपलक्ष्यमा सम्पूर्ण नेपाली जनताहरुको सुख शान्ति एवं समृद्धिका लागि हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

जुनु महर्जन — पूजा महर्जन
इच्छा रायमाझी — लक्ष्मी खड्का
मीना प्रसाई — देवकुमारी खड्का

विजयादशमी तथा शुभ दीपावली २०६६ को शुभ उपलक्ष्यमा समस्त नेपालीहरुको सुख शान्ति एवं समृद्धिका लागि हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

रामचन्द्र बस्नेत — पूर्णबहादुर खड्का
प्रेम कोइराला — दिपु गिरी
सरोज खत्री — रमेश खनाल

**शुभकामना**

विजयादशमी तथा शुभ दीपावली २०६६ को शुभ उपलक्ष्यमा सिद्धाश्रम शक्ति केन्द्रका समस्त कार्यकर्ता, साधक साधिका एवं शुभेच्छुकहरुको सुख शान्ति एवं समृद्धिका लागि हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

**उद्धव सुवेदी** तथा **परिवार**
चावहिल, काठमाडौं

**शुभकामना**

विजयादशमी तथा शुभ दीपावली २०६६ को शुभ उपलक्ष्यमा सम्पूर्ण शेयरहोल्डर, शुभचिन्तक एवं सम्पूर्ण नेपालीहरूमा हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

**ॐ उपकार बचत तथा ऋण सहकारी संस्था लि.**
नयाँबानेश्वर, काठमाडौं ।

**शुभकामना**

विजयादशमी तथा शुभ दीपावली २०६६ को शुभ उपलक्ष्यमा सम्पूर्ण देशवासीहरुको सुख शान्ति एवं समृद्धिका लागि हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

शिवहरि आचार्य — महालक्ष्मी अर्याल
सान्ता माधव श्रेष्ठ — बबी बिष्ट
शिशिर राज — शेरबहादुर भण्डारी

# मयूरासन

गोरक्ष निखिल वाणीको योग स्तम्भअन्तर्गत पाठकवृन्दहरुलाई हामीले हालका अंकहरुमा विविध आसनहरुको बारेमा जानकारी दिने प्रयास गरिरहेका छौँ । यसैअन्तर्गत यस अंकमा मयूरासनको बारेमा जानकारी दिन लागिएको छ ।

वर्तमान समय सबैका लागि व्यस्तताको समय हो । चरम भौतिक युग भएकाले यो युग अधिकांशका लागि धनोपार्जन र विलासितापूर्वक जिउने विषम युग पनि हो । बिहानको उषाकालदेखि रात्रिसम्म भौतिक उपलब्धिको लागि दौडादौड गर्ने वर्तमान समयमा कसैलाई आत्मिक उन्नतिको लागि केही समय बिताउने फुर्सद छैन । त्यसैले यस्तो परिस्थितिमा थोरै समयमा बढीभन्दा बढी लाभ प्राप्त हुने यदि संसारमा कुनै साधना छ भने त्यो योग साधना नै हो । यसले मानिसको दैनिक जीवनलाई सुरुचिकर बनाएर आध्यात्मिक गोरेटोतिर डोऱ्याउँछ । भौतिक वैभवलाई समुन्नत गर्दै आध्यात्मिक संसारमा पाइला टेकाउने माध्यमको रुपमा लिइने योग क्रियाबाट थोरै प्रयत्न, थोरै समय र एउटै आसनविधिबाट अधिकाधिक लाभ लिन सकियोस् भन्ने अभिप्रायले यसपटक मयूरासन (Peacock Pose) लाई पाठकसामु प्रस्तुत गरेका छौँ ।

हाम्रा पूर्वज ऋषिमुनिहरुले धेरै आसन विधिहरु विभिन्न पशुपक्षी र वस्तु तथा आकृति विशेषबाट प्रेरित भएर सृजना गरेका थिए । जस्तैः सर्पासन, धनुरासन, मत्स्यासन, गोमुखासन इत्यादिलाई यसको ज्वलन्त उदाहरणको रुपमा लिन सकिन्छ । त्यस्तै, मुजुर (मयूर) नामक पक्षीराजबाट प्रेरित भई अनुकरणीय हुन पुगेको मयूरासन अत्युत्तम एवं लाभदायक आसन विधि हो । यस आसन विधिले थोरै समयमा धेरै लाभ दिने हुनाले पनि यसको महत्त्व धेरै छ । विशेष गरी दिनभरि कामकाजमा व्यस्त रहनेहरुका लागि तथा पेटका रोगीहरुलाई यस आसनबाट विशेष फाइदा पुग्ने हुन्छ । यसले शारीरिक, मानसिक र आत्मिक सन्तुलन ल्याई जीवन सञ्चालन गर्ने कलाको विकास गर्दछ । यस घोर भौतिक युगमा सुख-दुःखमा पनि नियन्त्रित र संयमित हुँदै स्थिरबुद्धि (समबुद्धि) मा रहन यो आसन विधि महत्त्वपूर्ण छ । आध्यात्मिक र भौतिक सन्तुलनमा यसले ठोस भूमिका खेल्न सक्ने हुनाले सबैले यस आसनलाई अपनाउनु श्रेयष्कर नै हुन्छ ।

**आसन गर्ने विधि :**

१) दुवै घुँडा र दुवै खुट्टा जमिनमा टेकाएर घोप्टो परेर सरल रेखामा लम्पसार पर्ने ।
२) श्वास पूर्णरुपले भरेर पेटलाई कडा बनाउने ।
३) दुवै कुहिना पेटमा वा नाभीमा टेकाउने ।
४) शरीर र खुट्टालाई सरल रेखामा पर्ने गरी संयमित भई माथि उठाउने ।
५) हत्केला जमिनमा टेकाएर सम्पूर्ण शरीरलाई टेवा दिने ।
६) यस स्थितिमा केही समय बस्ने ।
७) खुट्टालाई जमिनमा टेकाउँदै बिस्तारै पूर्वावस्थामा आउने ।
८) यस आसनलाई शुरुको अवस्थामा तीनपटकसम्म दोहोऱ्याउन सकिन्छ ।

**सावधानीहरु :**

१) प्रारम्भिक अवस्थाका योग साधकहरुका लागि शुरुमा नै मयूरासनको अभ्यास सहज नहुन सक्छ । त्यसैले अन्य व्यायाम तथा अन्य सरल आसनहरुको अभ्यास गरेर मात्र यस आसनको अभ्यास गर्न सकिन्छ ।
२) गर्भवती महिला तथा बच्चाहरुले यस आसनको अभ्यास गर्नुहुँदैन ।
३) उच्च रक्तचाप, पेप्टिक अल्सर, हर्निया तथा मुटुका रोगीहरुले यस आसनको अभ्यास गर्नु हुँदैन ।
४) आसनको अभ्यास गर्दा धेरै सावधानी र सन्तुलित भएर गर्नुपर्दछ । यदि आसनको क्रममा अप्ठेरो तथा गाह्रो महसुस भएमा आसनको अभ्यास गर्नु हुँदैन ।

**यस आसन विधिका लाभ निम्नानुसार छन् :**

१) यस आसन विधिबाट पेटका समस्त भागमा बल पर्ने हुनाले पेटका समस्त व्याधि दूर हुन्छन् ।
२) पेटभित्रका अंगहरु बलिष्ठ हुन्छन् ।
३) ग्याष्ट्रिक रोग नाश हुन्छ ।
४) पेटको दुःखाइ निवारणका लागि यो अचुक उपाय हो ।
५) रक्तसञ्चार पाचन प्रणालीतर्फ हुने हुनाले मयूरासनबाट कलेजो, मृगौला समुचित ढंगबाट क्रियान्वित हुन पाउँछन् ।
६) यसले समान वायुमा उत्तेजना ल्याउँछ, फलस्वरुप साधकलाई भोक बढी लाग्ने गर्दछ ।
७) यो चिनी रोग (मधुमेह) मा लाभदायक छ ।
८) यसले हातलाई तीव्ररुपले बलियो बनाउँछ ।

यस आसनको नियमित अभ्यास गरेर यहाँहरुले पूर्णरुपमा लाभ उठाउनुहुनेछ भन्ने हामीलाई आशा एवं विश्वास छ । जय गुरुदेव !

# पौष्टिक गुणयुक्त जडिबुटी जेठीमधु

वनस्पति जगत्को परिचय दिँदै आयुर्वेदले श्रेष्ठ गुणकारी जडिबुटीको वर्णन गरेको छ । तीमध्ये एक जडी जेठीमधु (यष्टीमधु) पनि हो । यसको उपयोग धेरै रोगको उपचारमा हुन्छ । यसको सत्त्व पनि बनाइन्छ जसलाई जेठीमधुको सत्त्व भनिन्छ ।

यष्टीमधुको बारेमा भावप्रकाश निघण्टुमा लेखिएको छ–

यष्टी हिमा गुरुः स्वाद्वी चक्षुष्या बलवर्णकृत् ।
सुस्निग्धा शुक्रला केश्या स्वर्या पित्तानिलास्रजित् ॥
व्रणशोथ विषच्छर्दितृष्णाग्लानिक्षयापहा ॥ भा.प्र.

**गुण**ः जेठीमधु  शीतल, शीतवीर्य, भारी, स्वादिष्ट, आँखाको लागि हितकारी, बल तथा वर्णको लागि उत्तम स्निग्ध, वीर्यवर्द्धक, केश तथा स्वरको लागि गुणकारी छ तथा पित्त, वात एवं रुधिरविकार, व्रणशोथ, विष, वमन, तृषा, ग्लानि तथा क्षयरोग नष्ट गर्नमा सहायक औषधिको रुपमा प्रयोग गरिन्छ । यूनानी हिकमतका अनुसार यो रुखो, मीठो, तातो, मूत्रल, ऋतुस्राव नियमित गर्ने हुन्छ, शान्तिदायक तथा प्यास, खोकी, वमन, दम, ब्रोंकाइटिस, उदरशूल र टाउको दुःखाइमा प्रयोग गर्दा उत्तम हुन्छ, आँखाको लागि फाइदाजनक, त्रिदोषनाशक र घाउलाई भरिदिने हुन्छ ।

**परिचय**ः विभिन्न भाषामा जेठीमधुको नाम : संस्कृत- यष्टीमधु, हिन्दी- मुलहठी, मुलेठी, अंग्रेजी– लिकोरिस (Liquorice), ल्याटिन (Glycyrrhiza glabra Linn) । यस बिरुवाको जरा धेरै मीठो हुन्छ । यही जरा नै औषधिको रुपमा प्रयोग गरिन्छ । यो लट्ठीजस्तै हुन्छ र मुखमा राखेर चुसिन्छ । यसमा मुख्यतः एक तत्त्व ग्लिसिराइजिन (Glycyrrhizin) पाइन्छ जुन ग्लिसिराइजिक एसिडको रुपमा रहन्छ । यो चिनी, सख्खरभन्दा पनि ज्यादा मीठो हुन्छ । यसमा स्टिरोयिड इस्ट्रोजन पनि पाइन्छ र यसको अतिरिक्त ग्लुकोज, सुक्रोज, मैनाइट, स्टार्च ऐस्पैरेजिन, तीतो पदार्थ, राल, एक प्रकारको उडनशील तेल र एक रंजक तत्त्व पनि पाइन्छ । आयुर्वेदिक, युनानी र एलोप्याथिक चिकित्सापद्धतिमा यसको प्रयोग गरिन्छ । यसको गुण मधुर र शीतवीर्य हुन्छ, यसकारण यसको सेवन जुनसुकै मौसममा पनि गर्न सकिन्छ । यो जडिबुटी प्रथम श्रेणीको औषधिको रुपमा प्राचीनकालदेखि लोकप्रिय रहँदै आएको छ ।

**उपयोग**ः यसको उपयोग विभिन्न रोगलाई दूर गर्ने औषधिहरुमा घटक द्रव्यको रुपमा गरिन्छ । जस्तै, मिठो जुलाबमा, खोकीको गोलीमा, छातीमा जमेको सुख्खा कफ हटाउन, गलाको खराबी दूर गर्न र गला बसेको ठीक गर्ने गोलीमा तथा बलवीर्यबर्द्धक आदिको गोलीमा जेठीमधुको प्रयोग गरिन्छ । आयुर्वेदिक योग मधुयष्टचादि चूर्ण, यष्टचादि क्वाथ, यष्टीमध्वाद्य तैलमा यसको उपयोग गरिन्छ । यसलाई मुखमा राखेर चुस्नाले कफ सजिलै निस्कन्छ, गलाको खराबी र खोकी हट्दछ, विशेष गरेर सुख्खा खोकीमा आराम दिन्छ । यो रेचक गुण युक्त हुन्छ यसकारण जुलाबमा यसको उपयोग हुन्छ । श्वासकष्ट, कफ विकार, खोकी र दम रोगमा जेठीमधु धेरै हितकारी र उपयोगी हुन्छ । पौष्टिक गुणले भरिएको हुँदा यो शुक्रमेह र यौन दौर्बल्यता हटाउने बाजीकारक गोलीमा प्रयोग गरिन्छ । यो महिलाहरुका लागि धेरै उपयोगी हुन्छ र महिलाको मासिक ऋतुस्रावको अनियमितता (Menstrual Disorder) लाई हटाइदिन्छ । यहाँ परीक्षणबाट लाभकारी सिद्ध भएका केही घरेलु प्रयोग प्रस्तुत गरिँदैछ ।

**पौष्टिक औषधि**ः शरीरलाई पुष्ट, सुडौल र शक्तिशाली बनाउनको लागि कुनै पनि आयुका स्त्री वा पुरुषले सुत्ने समयमा जेठीमधुको पिसेको चूर्ण ५ ग्राम, आधा चम्चा शुद्ध घिउ र डेढ चम्चा मह यी तीनलाई मिलाएर चिसो पारिएको दूधसँग पिउनुपर्दछ । यसको प्रयोग २-३ महिनासम्म नियमितरुपमा गर्नाले शरीर पुष्ट, सुडौल र बलवान् हुन्छ ।

**कफको प्रकोप वा खोकी**ः खोकी भएको बेलामा यदि कफ सुख्खा छ भने बारबार खोकेपछि मात्र कफ निस्कने हुन्छ । जबसम्म गलाबाट कफ निस्कँदैन तबसम्म रोगी खोकिरहन्छ । यसको लागि ५ ग्राम जेठीमधुको चूर्ण २ कप पानीमा राखेर आधा कप हुने गरी उमाल्ने र आधा बिहान र आधा बेलुका सुत्नुभन्दा पहिले पिउने । यसको प्रयोग ३-४ दिनसम्म गर्नुपर्दछ । यसको लागि फेरि तताउन आवश्यक हुँदैन, मात्र छोपेर राखे हुन्छ । यसको प्रयोगले कफ पातलो हुन्छ र सजिलैसँग निस्कन्छ र खोकी वा दमको रोगीलाई

धेरै राहत मिल्न जान्छ ।

**जलनः** जेठीमधु र रक्तचन्दन पानीमा घोलेर लेप लगाउनाले जलन शान्त हुन्छ ।

**मुखको छालामाः** जेठीमधुको टुक्रा मुखमा राखेर चुस्नाले मुखको छाला ठीक हुन्छ । यसको चूर्ण थोरै महसँग मिलाएर चाट्नाले पनि आराम हुन्छ ।

**हिक्काः** जेठीमधुको चूर्ण महसँग मिसाएर चाट्नाले हिक्का आउन बन्द हुन्छ । यसको प्रयोगले वात, पित्तको पनि शमन हुन्छ ।

**वमनः** पेटमा अम्ल र पित्त बढ्नाले स्वास्थ्य बिग्रन थाल्दछ, बेचैनी र छटपटी हुन्छ, उल्टी हुन थालेको जस्तो लाग्छ तर उल्टी भने हुँदैन । कहिलेकाहीँ टाउको दुःखाइबाट पनि यस्तो हुन्छ जुन उल्टी भएपछि मात्र ठीक हुन्छ । उल्टी लगाउनका निम्ति २ कप पानीमा २ चम्चा (१० ग्राम) जेठीमधुको चूर्ण राखेर काढा बनाउने, जब पानी आधा कप हुन्छ तब उमाल्न छोड्ने र चिसो बनाएर राख्ने । रायोको पिसिएको चूर्ण ३ ग्राम यसमा राखेर पिउनाले वमन हुन्छ जसबाट पेटमा जमेको पित्त वा कफ निस्कन्छ । यसबाट रोगीको स्वास्थ्यस्थिति राम्रो हुन जान्छ । यसको प्रयोग विषाक्त प्रभाव, अजीर्ण, अम्लपित्त, खोकी र कफको वृद्धि भएमा वा छातीमा कफ जमेको अवस्थामा प्रयोग गर्दा उत्तम हुन्छ ।

**पेटको दुःखाइमाः** वात प्रकोपबाट हुने उदरशूलमा माथि बताइएको जेठीमधुको कफ खोकीमा प्रयोग गरिने काढा आधा बिहान र आधा बेलुका पिउनाले उदरशूल ठीक हुन जान्छ ।

**मासिक ऋतुस्रावः** जेठीमधुको चूर्ण ५ ग्राम थोरै महमा मिसाएर चटनीजस्तो बनाएर चाट्ने र मिश्री मिलाएर चिसो बनाइएको दूध पिउनाले मासिक ऋतुस्राव नियमित हुन्छ । यसको प्रयोग कम्तिमा पनि ४० दिनसम्म बिहान-बेलुकी गर्नुपर्दछ । यदि महिलाको पित्त कुपित भएर मासिक ऋतुस्रावमा रगत अधिक मात्रामा र धेरै दिनसम्म जान्छ भने २० ग्राम जेठीमधुको चूर्ण र ८० ग्राम पिसिएको मिश्री मिसाएर १० भाग बनाउने, बेलुकी एक कप चामल धोएको पानी (चौलानी) का साथ एक भाग सेवन गर्ने ।

**बलवीर्यवर्द्धकः** जेठीमधुको चूर्ण ५ ग्राम र ५ ग्राम अश्वगन्धा चूर्ण थोरै घिउसँग मिलाएर चाट्ने र मिश्री मिसाइएको दूध पिउने । लगातार ६० दिनसम्म बिहान-बेलुकी प्रयोग गर्नाले यथेष्ट मात्रामा बलवीर्यको वृद्धि हुन्छ र शरीर पुष्ट, सुडौल हुन्छ । जय गुरुदेव !

## हार्दिक श्रद्धाञ्जलि

**स्व. राममाया पिया**

हाम्री प्रातः स्मरणीय आमा राममाया पियाको असामयिक स्वर्गारोहण भएकोमा उहाँको आत्माको चिर शान्तिको लागि परमपूज्य सद्‌गुरुदेवहरुको चरणकमलमा सभक्ति प्रार्थना गर्दछौँ । साथै यस दुःखद घडीमा समवेदना प्रकट गर्ने सम्पूर्ण स्वजन मित्रजनहरुमा हार्दिक कृतज्ञता ज्ञापन गर्दछौँ ।

**दिलकुमार पिया**
**सनदकुमार पिया**

## हार्दिक श्रद्धाञ्जलि

**स्व. सूर्यमाया महर्जन**

हाम्री परम पूज्य माता सूर्यमाया महर्जनको ७६ वर्षको उमेरमा मिति २०६६ भाद्र २४ गते स्वर्गारोहण भएकोमा दिवंगत आत्माको चिर शान्तिको लागि परमपूज्य सद्‌गुरुदेवहरुसँग प्रार्थनाका साथ यस दुःखद घडीमा समवेदना तथा सान्त्वना दिनुहुने सम्पूर्ण आत्मीयजनलाई हामी हार्दिक कृतज्ञता ज्ञापन गर्दछौँ ।

**छोरा/बुहारी**
सिद्धि महर्जन/सुलोचना बानियाँ
ललितनारायण महर्जन/रीता महर्जन
प्रेमकुमार महर्जन/सबिना महर्जन
प्रकाश महर्जन/आरती महर्जन

## हार्दिक श्रद्धाञ्जलि

**स्व. आदित्य प्रधान**

हाम्रा आत्मीय मित्र एवं साधक आदित्य प्रधानको असामयिक निधन भएकोमा दुःख व्यक्त गर्दै दिवंगत आत्माको चिर शान्तिका लागि परमपूज्य सद्‌गुरुदेवहरुको चरणकमलमा प्रार्थना गर्दछौँ । साथै शोक सन्तप्त परिवारजनप्रति यस दुःखद घडीमा धैर्य धारण गर्ने क्षमता प्राप्त होस् भन्ने कामना गर्दै समवेदना व्यक्त गर्दछौँ ।

**सिद्धाश्रम शक्ति केन्द्र परिवार**
बसुन्धरा, काठमाडौँ

# सिद्धाश्रम शक्ति केन्द्र
# सम्पर्क कार्यालय सौरपानी

परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको असीम कृपा एवं आशीर्वादस्वरुप प्राप्त भएको आध्यात्मिक जागरणको आन्दोलनलाई नयाँ ढङ्गबाट प्रस्फुटित गर्दै गोरक्ष निखिल युग निर्माण गर्नको लागि सद्गुरुदेवकै आदेश निर्देशन बमोजिम सिद्धाश्रम शक्ति केन्द्रको स्थापना भएको हो ।

गाउँ शहरलाई मात्र नभएर विश्व ब्रह्माण्डलाई नै आध्यात्मिक नेतृत्व प्रदान गर्नुपर्ने अवस्थामा आध्यात्मिक तपोभूमि हिमालको काखमा अवस्थित नेपालको सिद्धाश्रम शक्ति केन्द्रले उदाहरणीय र अनुकरणीय भएर अघि बढ्नुपर्ने कुरा आजको आवश्यकता हो ।

सिद्धाश्रम शक्ति केन्द्रको संगठनात्मक विस्तार योजनालाई साकार रुप दिन महायोगी गुरु गोरखनाथको प्रकटभूमि गोरखा देवदेवीहरुको तपोभूमि गोरखा सौरपानीमा २०५७ साल पुस १२ गतेका दिन स्थानीय जागरुक साधक साधिकाहरुको पहलमा र केन्द्रको निर्देशनमा स्थापना भएको थियो ।

द्वन्द्वकालको जटिल र कठिनतम परिस्थितिमा पनि सम्पर्क कार्यालय सौरपानीले आफ्नो आध्यात्मिक क्रियाकलापलाई संचालन गरीराख्न सफल रहेको छ । कहिले कोठा, कहिले चोटा र गोठ हुँदै हाल आफ्नै भवनमा नित्य आरती सञ्चालन गर्न पाउनु पनि सद्गुरुदेवहरुको लीला नै मान्नुपर्छ ।

गोरक्ष प्रकट भूमि, सावर भूमि गोरखा जिल्लाको सौरपानी इलाकाको हात्तीसूँढे डाँडा (गोरक्ष निखिल मन्दिरस्थल) यस्तो दिव्यतम पवित्रतम आध्यात्मिक तपस्थली हो जहाँ परापूर्वकालदेखि देव, ऋषिमुनि, योगी, तान्त्रिक, मान्त्रिकहरुले योग, ध्यान, साधना गरी सिद्धि शक्ति प्राप्त गरेका थिए । यो स्थल आज पनि उत्तिकै चैतन्य र ऊर्जामय रहेको छ । भगवान् बाघ भैरव, मूलदेवी, ताकुदेवी, सिद्धगुफाजस्ता ऊर्जामय आध्यात्मिक क्षेत्रले घेरिएको यन्त्राकार क्षेत्रको मूलमा रहेको सि.श.के. सम्पर्क कार्यालय सौरपानी पोखरी डाँडाको भवन र सद्गुरुदेवद्वयको जाज्वल्यमान मूर्तिले स्थानीयवासीलाई मात्र नभएर सम्पूर्ण देशवासीहरुलाई नै सद्गुरुदेवको कृपा आशीर्वाद प्राप्त भइरहेको छ ।

गोरखा जिल्ला निर्वाचन क्षेत्र नं. ३ अन्तर्गत सौरपानी पोखरी डाँडा क्षेत्रमा निर्मित भवनमा सौरपानी सम्पर्क कार्यालय अवस्थित छ । यस अन्तर्गत पाँचरदुवा देउराली, कोइराला गाउँमा आरती सञ्चालन केन्द्र रहेको छ भने मसेल, छापथोकमा प्रचारप्रसार कक्ष सञ्चालित छन् ।

यस सम्पर्क कार्यालयमा दैनिक आरती, जनसम्पर्क, मन्त्र जप, ध्यानका गतिविधिहरु सञ्चालित छन् भने हरेक महिनाको पहिलो बिहीबार गुरु पूजन, मासिक २१ तारीखमा दिव्य गुरु महोत्सव, महिनाको पहिलो सोमबार गोरक्ष हवन हात्तीसूँढे डाँडामा हुनुको साथै गोरक्ष निखिल मन्दिरमा पूजन सम्पन्न भइरहेको छ । यातायातको दृष्टिले त्यति सुगम नभएकोले गर्दा ध्यान साधनाका खुल्ला कार्यक्रम हुन नसकिरहेकाले गोरखा बजार, चितवन, पोखरा र काठमाडौं धाउनुपर्ने स्थिति रहेको छ । पत्रिका सदस्यता संख्या विस्तार कार्यक्रम शुरु हुँदैछ । आधारभूत तालिम लिनेदेखि गुरु सेवा दलसम्म गरी हाल यस क्षेत्रमा ३१ जना कार्यकर्ता रहेका छन् ।

सावर साधनाको उद्गम स्थल, आध्यात्मिक पीठ रहेको स्थल, आयुर्वेदिक जडिबुटीहरुको खजाना रहेको स्थल भएकोले सम्बन्धित क्षेत्रले विशेष ध्यान पुऱ्याएर यस ठाउँलाई विश्वकै नमुना आध्यात्मिक पर्यटन स्थल बनाउन सकिने स्थिति छ । यस सुन्दर स्थानमा बसेर साधना गरी सक्दो आध्यात्मिक लाभ प्राप्त गर्न इच्छुक साधक साधिकाले पनि यस क्षेत्रको भ्रमण गरी मनमा आनन्द र शान्तिको प्रस्फुटन गराउन सक्नुहुनेछ ।

जय गुरुदेव ।

## हवन कार्यक्रम

परमपूज्य सद्गुरुदेवहरूको परम कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिनाको पहिलो हप्ता विभिन्न बारहरूमा विभिन्न मन्दिर तथा शक्तिपीठहरूमा सम्पन्न गर्दै आइरहेको मासिक हवन कार्यक्रमहरूलाई गत भाद्र महिनामा पनि निरन्तरता दियो । हवन कार्यक्रमअन्तर्गत भाद्र १ गते श्री शिव गोरक्ष हवन कार्यक्रम पशुपति मृगस्थलीस्थित गुरु गोरखनाथको मन्दिर प्रांगणमा, भाद्र २ गते तान्त्रोक्त वटुक भैरव हवन कार्यक्रम लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा, भाद्र ३ गते तान्त्रोक्त महालक्ष्मी हवन कार्यक्रम लगनखेलस्थित महालक्ष्मी मन्दिर प्रांगणमा तथा भाद्र ४ गते तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम पाटन कुम्भेश्वरस्थित बगलामुखी मन्दिर प्रांगणमा सम्पन्न भयो । उपरोक्त हवन कार्यक्रमहरूमध्ये तान्त्रोक्त वटुक भैरव हवन कार्यक्रम बिहान ७:०० बजेदेखि ८:०० बजेसम्म तथा अन्य हवन कार्यक्रमहरू बिहान ८:०० बजेदेखि ९:०० बजेसम्म सञ्चालन भएको थियो ।

यस्तै मासिक हवनकै शृङ्खलामा सम्पर्क कार्यालय रामघाट पोखराको आयोजनामा गत भाद्र ३ गते बुधबार स्थानीय विन्ध्यवासिनी मन्दिर प्रांगणमा तान्त्रोक्त विन्ध्यवासिनी हवन कार्यक्रम सम्पन्न भयो भने सम्पर्क कार्यालय तनहुँको आयोजनामा भाद्र ४ गते बिहीबार स्थानीय वेद व्यास गुफा परिसरमा तान्त्रोक्त महर्षि वेदव्यास हवन कार्यक्रम सम्पन्न भयो भने सम्पर्क कार्यालय भक्तपुरले पनि गत भाद्र २ गते मंगलबार सूर्यविनायक मन्दिर प्रांगणमा तान्त्रोक्त गणपति हवन सम्पन्न गऱ्यो ।

## दिव्य गुरु महोत्सव

'कुण्डलिनीको दृष्टिले हेर्ने हो भने नेपाल आज्ञा चक्रमा पर्दछ, त्यसैले नेपाल अध्यात्मको मूल हो । स्वर्णिम युगमा जान हाम्रो बानी, व्यहोरा, आध्यात्मिक धरातल राम्रो हुनुपर्दछ । गुरुदेवहरुको आशीर्वादका लागि हामी पनि योग्य हुनुपर्दछ ।' गत भाद्र ५ गते दिव्य गुरु महोत्सवको अवसरमा सिद्धाश्रम शक्ति केन्द्र सावरपन्थी सदस्य नं. १ श्री लालबहादुर ढकालज्यूले आफ्नो मन्तव्य व्यक्त गर्ने क्रममा माथिको कुरा राख्नुभएको थियो ।

सोही अवसरमा सावर पन्थी सदस्य नं. २ श्री रामजी अर्यालज्यूले दिव्य गुरु महोत्सवलाई परमपूज्य सद्गुरुदेवलगायत देवीदेवताहरुको कृपा, आशीर्वाद पाउने अवसरको रुपमा लिनुपर्ने धारणा व्यक्त गर्नुभयो । उहाँले बोल्ने क्रममा गुरु र संस्थालाई श्रद्धा, विश्वासको केन्द्र बनाएपछि प्राप्ति सम्भव हुने बताउनुभएको थियो । उहाँले हालै भएको रसिया भ्रमण उपलब्धिमूलक रहेको जानकारी पनि उक्त अवसरमा दिनुभएको थियो ।

काठमाडौँको जैन भवनमा आयोजित उक्त दिव्य गुरु महोत्सव विभिन्न कार्यक्रमहरुका बीच सम्पन्न भएको थियो । परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज डा. नारायणदत्त श्रीमालीको रुपमा यस धरतीमा अवतरित हुनुभएको पावन दिनको स्मरण गर्दै सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिनाको २१ तारीखलाई दिव्य गुरु महोत्सवको रुपमा मनाउँदै आइरहेको छ ।

स्तवन वन्दनासँगसँगै बिहान १०:१५ मा शुरु भएको महोत्सवमा गुरु पादुकाको दिव्य पूजन, मन्त्रजप, हवन, आरती, भजन-कीर्तन र नृत्य आदि सम्पन्न भएका थिए । महोत्सवमा पूजन गर्ने सौभाग्य साधिकाहरु साधना सिं शाही तथा नमिता सिंले प्राप्त गर्नुभएको थियो ।

कार्यक्रमको दोस्रो चरण गुरु सेवा दलका सदस्य कैलाश सुब्बाको स्वागत मन्तव्यबाट शुरु भएको थियो । यस चरणमा आरती संचालन केन्द्र डाँछीका स-साना भाइबहिनीहरुबाट 'सिद्धाश्रमका गोरख निखिल' बोलको भजनमा नृत्य प्रस्तुत भएको थियो भने सम्पर्क कार्यालय ललितपुरबाट सामूहिक नृत्य र गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमकी विद्यार्थीबाट एकल नृत्य प्रस्तुत भएको थियो ।

सावर पन्थी सदस्य नं. १ ज्यूले महोत्सवमा पाल्नुभएका सबैका लागि सद्गुरुदेवबाट प्रदत्त विशेष तान्त्रिक ध्यान पनि प्रदान गर्नुभएको थियो ।

## श्रीकृष्ण जन्माष्टमीमा कार्यक्रम

गत श्रावण २९ गते श्रीकृष्णजन्माष्टमीको पावन अवसरमा सिद्धाश्रम शक्ति केन्द्रले योगेश्वर भगवान् श्रीकृष्णको पूजन तथा भजनकीर्तन कार्यक्रम सम्पन्न गऱ्यो । बिहान ८:०० बजे प्रार्थना, स्तुति वन्दनाबाट शुभारम्भ भएको उक्त कार्यक्रममा गुरुपूजन, श्रीकृष्णपूजन, आरतीलगायतका क्रमहरु सम्पन्न भएका थिए । कार्यक्रममा पूजन गर्ने सौभाग्य साधिकाहरु जयन्ती मल्ल र सविता सुनुवारले प्राप्त गर्नुभएको थियो ।

## आ.ने. तहको तालिम

सिद्धाश्रम शक्ति केन्द्रले गत भाद्र २० र २१ गते आध्यात्मिक नेतृत्वकर्ताहरुका लागि १४ औं तालिम तथा प्रशिक्षण कार्यक्रम सम्पन्न गऱ्यो ।

काठमाडौंको कमलपोखरीस्थित अग्रवाल भवनमा आयोजित दुई दिवसीय उक्त तालिम तथा प्रशिक्षण कार्यक्रम दुवै दिन बिहान १० बजे सद्‌गुरुदेवहरूको स्तुति वन्दना-प्रार्थनाबाट शुरु भई साँझको नित्य आरतीपछि टुंगिएको थियो ।

विभिन्न सत्रमा सम्पन्न तालिम कार्यक्रममा सम्पन्न दिव्य गुरु पादुका पूजनमा पूजन गर्ने सौभाग्य पाउनेहरुमा गीता के.सी., लीलादेवी सिम्खडा, शारदा पुडासैनी, भगवान् पाण्डे, दिनकुमार के.सी. र बुद्धिराज भण्डारी हुनुहुन्थ्यो ।

उक्त कार्यक्रममा आध्यात्मिक नेतृत्व तह, अबको कार्यदिशा, अज्ञात नाथ पन्थी पद्धति, आश्रमका नीति नियम पालना आदि विषयमा प्रशिक्षण दिइएको थियो । उक्त अवसरमा विशेष मुद्रासहितको विशेष ध्यान पनि प्रशिक्षार्थीहरूले प्राप्त गर्नुभएको थियो । उक्त कार्यक्रमको बीचबीचमा भजन पनि प्रस्तुत भएका थिए ।

कार्यक्रममा काठमाडौं, ललितपुर, भक्तपुर, गोरखा, चितवन, कास्की, तनहुँ, सिन्धुलीलगायत जिल्लाबाट आउनुभएका प्रशिक्षार्थीहरूको सहभागिता रहेको थियो । ७३ जना प्रशिक्षार्थीले कार्यक्रममा सहभागिता जनाउनुभएको थियो ।

कार्यक्रममा सावर पन्थी सदस्य नं. १, २, ३ र सावर मातृकाज्यूले प्रशिक्षण प्रदान गर्नुभएको थियो । कार्यक्रमको उद्‌घोषण सा.प.२ ज्यूले गर्नुभएको थियो ।

कार्यक्रमको अन्तमा सुनाइएको ग्रेडिङ्गअनुसार आध्यात्मिक नेतृत्वकर्ता तहबाट प्रस्तावित गु.से.द. सदस्यको रुपमा ३४ जना पदोन्नत हुनुभएको थियो । संस्थाको इतिहासमै पहिलोपटक यति धेरै संख्यामा प्रस्तावित गुरुसेवा दलमा भित्रिने सफलता प्राप्त भएको छ ।

सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिना आफ्ना विभिन्न तहका कार्यकर्ताहरुका लागि तहगतरुपमा सञ्चालन गर्दै आइरहेका यस्ता कार्यक्रमहरुमा सहभागी हुन विभिन्न तहका कार्यकर्ताहरु महिनौंदेखि प्रतीक्षारत रहन्छन् ।

## तीज एवं ऋषि पञ्चमीमा कार्यक्रम

हरितालिका (तीज) को अवसरमा गत भाद्र ७ गते सिद्धाश्रम शक्ति केन्द्र बसुन्धरामा नाचगान कार्यक्रम सम्पन्न भयो । मध्याह्न १२:०० बजेदेखि शुभारम्भ भएको उक्त कार्यक्रम दिनभरि नै चलेको थियो ।

त्यसको भोलिपल्ट ८ गते ऋषि पञ्चमीको दिनमा ऋषिपञ्चमी पूजन कार्यक्रम पनि आश्रम प्रांगणमा नै सञ्चालन भएको थियो । पूजन कार्यक्रममा सहभागी दिदी बहिनीहरुलाई संस्थाको तर्फबाट भोजनको व्यवस्था पनि गरिएको थियो ।

## कावासोतीमा कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्र क्षेत्रपुर सम्पर्क कार्यालयको आयोजनामा गत नवलपरासीको कावासोती नजिकै राधाकृष्ण मन्दिर प्रांगणमा गत भाद्र १ गते भजनकीर्तन एवं प्रचारात्मक कार्यक्रम सम्पन्न भयो । उक्त कार्यक्रममा सहभागीहरुलाई परमपूज्य सद्‌गुरुदेवहरुको बारेमा पनि जानकारी दिइएको थियो । मन्दिरमा उपलब्ध कोठामा हाल सोमवार र बिहीवार गरी दुई दिन साँझको आरती सञ्चालन हुँदै आइरहेको छ ।

## निरीक्षण तथा प्रशिक्षण सम्पन्न

सिद्धाश्रम शक्ति केन्द्रका विभिन्न सम्पर्क कार्यालयहरुमा गत महिना विभागीय संयोजकज्यूहरुबाट निरीक्षण तथा प्रशिक्षण सम्पन्न भयो । गत भाद्र १४ गते देखि १७ गतेसम्म भएको उक्त कार्यक्रमअन्तर्गत सम्पर्क कार्यालय रामघाट (कास्की), लेखनाथ (कास्की), गौरीगञ्ज (चितवन), दमौली (तनहुँ) मा प्रशिक्षण सम्पन्न भए भने विन्ध्यवासिनी (कास्की) मा निरीक्षण सम्पन्न भयो । त्यसै क्रममा सम्पर्क कार्यालय रामघाट कास्कीमा दोस्रो तहको तान्त्रिक ध्यानको शुभारम्भ पनि गरिएको थियो ।

प्रशिक्षण तथा निरीक्षणको क्रममा संयोजकज्यूहरु काठमाडौंमा रहेका आरती संचालन केन्द्रहरुमा पनि पुग्नुभएको थियो ।

यसैबीच काठमाडौंमा रहेका तीनकुने, सिमलटार, म्हैपी तथा विशालनगरका आरती सञ्चालन केन्द्रहरु विकसित भएर प्रस्तावित सम्पर्क कार्यालयमा रुपान्तरण भएका छन् । संस्थाको विकास र विस्तारसँगसँगै गत भाद्र २० गतेदेखि काठमाडौं जिल्लामा सिद्धाश्रम शक्ति केन्द्रका चारवटा प्रस्तावित सम्पर्क कार्यालयहरु थपिएका हुन् । प्रस्तावित सम्पर्क कार्यालयहरु विकसित भएर सम्पर्क कार्यालयमा रुपान्तरण हुने प्रावधान रहेको छ ।

# मंगलमय शुभकामना

विजयादशमी तथा शुभ दीपावली २०६६ को उपलक्ष्यमा समस्त मार्गविहीन, गतिविहीन भएर अशान्तिको भुमरीमा जलिरहेको समाज, राष्ट्र र विश्वलाई नै परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ, परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज, माता नवदुर्गा भवानी एवं महालक्ष्मी माताको शीतल छहारीको सहारा मिलोस् भनी **मंगलमय शुभकामना** व्यक्त गर्दछौं ।

दिलबहादुर वोगटी — सुदर्शन आचार्य
सचिव — कार्यालय सहायक
एवं छैमले गा.वि.स. परिवार

शेखरनिधि पौड्याल — प्रदिप पौडेल
सचिव — कार्यालय सहायक
एवं टल्कु डुँडेचौर गा.वि.स. परिवार

राधाकृष्ण श्रेष्ठ — महेश शाक्य
सचिव — कार्यालय सहायक
एवं दक्षिणकाली गा.वि.स. परिवार

श्रीधर भुसाल — वलदेवकुमार श्रेष्ठ
सचिव — कार्यालय सहायक
एवं सेतीदेवी गा.वि.स. परिवार

लेखनाथ अधिकारी — प्रदिप बस्नेत
सचिव — कार्यालय सहायक
एवं शेषनारायण गा.वि.स. परिवार

रमेशकुमार भट्टराई — जयराम गिरी
सचिव — कार्यालय सहायक
एवं चाल्नाखेल गा.वि.स. परिवार

लोमस आचार्य — नमराज बानियाँ
सचिव — कार्यालय सहायक
एवं मातातीर्थ गा.वि.स. परिवार

प्रकाश पौडेल — राजु प्रसाद तिमल्सिना
सचिव — कार्यालय सहायक
एवं गोलढुंगा गा.वि.स. परिवार

ऋषिराम अर्याल — दीपक धिताल
सचिव — कार्यालय सहायक
एवं धापासी गा.वि.स. परिवार

लोकनाथ तिवारी — दिपककुमार उपाध्याय
सचिव — कार्यालय सहायक
एवं थानकोट गा.वि.स. परिवार

# श्री शिव गोरक्ष-नाथंप्रदाय

*परमपूज्य सद्गुरुदेव श्री शिव गोरक्ष सम्बन्धी विभिन्न सत्य तथ्य कुराहरूको बारेमा जानकारी दिने क्रममा यस अंकदेखि श्री सावर संरचना शक्ति केन्द्र नेपालद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा लिखित 'श्री शिव गोरक्ष-नाथंप्रदाय' ग्रन्थबाट विभिन्न प्रसंगहरू क्रमशः प्रकाशित गर्दै जानेछौं । आशा छ यसबाट श्री शिव गोरक्षको बारेमा थप जानकारी पाई पाठकवर्ग लाभान्वित हुनुहुनेछ ।*

## नाथ शब्दको रहस्य

....नाथ शब्दको व्यापकता, उच्चताको बारेमा चर्चा गर्ने क्रममा यस शब्दको प्रयोग, अर्थादिका बारेमा पनि जानकारी हुनु आवश्यक हुन्छ । नाथ शब्दको विभिन्न रुपमा, विभिन्न किसिमले अर्थ लगाइएको पाइन्छ । गोरक्षदर्शनमा विजयपाल सिंहले पनि यस कुराको उल्लेख यसरी गरेका छन्– "बौद्ध धर्मको प्रसिद्ध मानिएको ग्रन्थ 'धम्मपद'अन्तर्गत नाथ शब्द स्वामी अथवा मालिक भन्ने अर्थमा प्रयोग भएको छ भने जैन धर्मअन्तर्गत दिगम्बर सम्प्रदायको साहित्यमा भगवान् महावीरको कुलको नामसमेत 'नाथ' वंशको रुपमा दिइएको पाइन्छ । कवीरले 'नाथ'को प्रयोग 'मायाजेता'को अर्थमा गरेको पाइन्छ जसलाई त्रिभुवनका पति भनिएको छ । नाथलाई छोडी अरू सबै ब्रह्मा, विष्णु, रुद्र, देवता, नर तथा अन्य पशुपक्षी आदि जीव मायाबाट ग्रसित, स्त्रीहरुद्वारा विजित हुन् । केवल एक नाथ मात्रै अविजित छ । यसैले 'नाथ'लाई मायालाई जित्ने मायाजेता भनिएको हो ।" यस कुराको उल्लेख 'गोरक्षनाथ सन्देश'मा रहेको छ ।

'नाथ' शब्द स्वामी, मालिकको रुपमा प्रयोग भएको पाइन्छ । कतैकतै पतिवाचकको रुपमा पनि यो शब्द रहेको कुराको विभिन्न लेखकहरुले उल्लेख गरेको पाइन्छ । गौरीपति शिवलाई गौरीनाथ भनिएको छ भने प्रजापति ब्रह्मालाई प्रजानाथ भनिएको छ । रघुपति राघव राजा रामलाई रघुनाथ भनिन्छ । श्रीकृष्ण भगवान्‌लाई यदुनाथ भनिन्छ । प्राणपतिलाई प्राणनाथ भनिएको पाइन्छ । यसरी नाथ पन्थीहरुका ग्रन्थमा उल्लेख गरिएको नाथ शब्द विवेचनाबाट नाथ शब्द कुनै संकुचितरुपमा तथा उपाधिको रुपमा नभई ईश्वर, ब्रह्म, परमतत्त्व, परमात्माको रुपमा प्रयोग भएको पाइन्छ । भुवनत्रयमा परिव्याप्त 'नाथ' सर्वव्यापक, सर्वद्रष्टा एवं सर्वश्रेष्ठ छ । 'नाथ' अव्यक्त परब्रह्म शिवको साकार मूर्ति हो । साथै नाथ सबैका लागि साझा तथा लक्ष्य प्राप्तिको मूलभूत कारण हो । नाथ शब्दलाई मोक्षदाताको रुपमा लिइएको छ । शक्ति संगम तन्त्रमा यस कुराको यसरी उल्लेख गरिएको छ–

**शक्ति जगत् कर्त्री शिवः पालकः ।**
**काल संहारकः नाथो मुक्तिदायक ॥**

सृष्टि, स्थिति, लयको प्रक्रियामा शक्ति शिवको सृजना गर्दछिन्, शिव त्यसको परिपालन गर्दछन् र कालले त्यसको संहार गर्दछन् भने नाथले मुक्ति दिन्छन् । यसरी नाथको आश्रय लिएर योगीहरुले मुक्ति प्राप्त गर्दछन् ।

नाथ पन्थको आधिकारिक ग्रन्थको रुपमा लिइने गोरक्ष सिद्धान्त संग्रहमा नाथको तीन रुप भएको मानिएको छ जसअनुसार अद्वैत परिवर्ती नाथ प्राप्य देवता, निराकार ज्योतिरुप नाथ धेय र आदि गुरुको रुपमा साकार नाथ उपास्य छन् भनी यसप्रकार उल्लेख छ–

**अस्मिन मार्गे अद्वैतो परिवर्ती नाथो देवता प्राप्या निराकार ।**
**ज्योति नाथो धेयः साकार नाथ उपास्योऽथ च आदि गुरु ॥**

यसै ग्रन्थमा योगीहरुका वास्तविक सिद्धान्तहरु उल्लेख भएका पाइन्छन् । नाथ पन्थीहरुलाई अन्य नामहरुले पनि सङ्केत गरेको पाइन्छ जसमा सिद्धान्त, सिद्धमार्ग, योगमार्ग, नाथमार्ग, योगसम्प्रदाय, अवधूतमार्ग, हठयोग आदि नामबाट लक्षित गरिएको छ। नाथ पन्थमा हठयोग योगाभ्यासलाई मूलधर्म मानिएको छ । योगलाई मूल आधार मानी अगाडि बढ्ने भएकोले यो योगमार्ग, योगसम्प्रदाय, हठयोगी भनी लक्षित गरिएको छ भने सिद्ध व्यक्ति नै योग्य, सक्षम हुने र नाथ भन्न लायक हुने भएकोले सिद्धमार्ग भनिएको छ। यसरी विभिन्न नामले सिङ्गो नाथपन्थलाई, नाथयोगीहरुलाई इङ्गित गरिएको पाइन्छ भने कानफट्टा, दर्शनी, गोरखनाथी, गोरखपन्थी, रावल आदि नाममा पनि विभिन्न विद्वान्हरुले व्याख्या गरेका छन् ।

**सृष्टि, स्थिति, लयको प्रक्रियामा शक्ति शिवको सृजना गर्दछिन्, शिव त्यसको परिपालन गर्दछन् र कालले त्यसको संहार गर्दछन् भने नाथले मुक्ति दिन्छन् । यसरी नाथको आश्रय लिएर योगीहरुले मुक्ति प्राप्त गर्दछन् ।**

जब कुनै व्यक्ति सद्गुरुको निर्देशनमा रही योगाभ्यास गर्दै अगाडि बढ्दछ, क्षमता एवं सामर्थ्य प्राप्त गर्दछ तब उसलाई विशेष दीक्षा प्रदान गरी कान छेड्ने गरिन्छ र कुनै धातु, दाँत वा स्फटिकको कुण्डल लगाइन्छ । कुण्डललाई दर्शन पनि भनिने भएकोले कान छेडी कुण्डल लगाउनेहरुलाई दर्शनी साधु भनिन्छ । दर्शनी शब्दको अर्थ मूल दर्शन हो । गोरक्ष दर्शनलाई आत्मसात् गर्नेहरुलाई दर्शनयोगी भनिन्छ । यो सारा संसार दर्शनकै भरमा चलेको छ । जसले मूल दर्शनलाई आफ्नो जीवनमा पालना गर्न सक्दछन्, तिनीहरु नै वास्तविकरुपमा योगी हुन् । शब्द ब्रह्मलाई बुझ्न सक्नेहरु, शब्दलाई पूर्णरुपले पालना गर्नेहरु नै वास्तविकरुपमा नाथ हुन् ।

नाथ शब्दलाई हाम्रो समाजमा विभिन्नरुपमा प्रयोग गरिएको पाउँछौं । कान छेडेका योगीहरुले एकआपसमा 'नाथजी' भनेर पनि सम्बोधन गरेको पाउँछौं भने कैयौं व्यक्तिहरुले प्रतिष्ठाको लागि पनि यो शब्दलाई आफ्नो नामको पछाडि राख्ने गरेका छन् । त्यस्तै, कसैले आदरणीय, दिव्य शब्दको रुपमा यसलाई लिई अनुकरणीय कार्य होस् भन्नाका लागि पनि लिएको पाउछौं, जसरी विभिन्न देवी–देवता, भगवान्हरुको नामबाट राख्ने प्रचलन यद्यपि छँदैछ ।

यसरी 'नाथ'को शाब्दिक अर्थ खोज्दा, यस शब्दभित्र समेटिएको व्यापकताबारे चर्चा गर्दा प्रयोग हुने अवस्था हेर्दा सम्पूर्ण रुपबाट नाथ शब्दको अर्थ परमपद, परमात्मा, ईश्वरकै स्वरुपबाट रहेको पाइन्छ । नाथ पन्थमा शिव र शक्तिको जुन रुपमा आदर, सम्मान र पूजन गरिन्छ, शिव र शक्तिको जुन सम्बन्ध पाइन्छ, यसबाट पनि नाथ पन्थ अत्यन्त प्राचीन भएको स्पष्ट हुन्छ । अनेकौं मार्गहरु, परम्पराहरु समाविष्ट सम्प्रदाय एवं पन्थ भएकोले र सम्पूर्ण देवताहरुलाई उपास्यको रुपमा लिने, योगमार्गलाई आत्मसात् गर्ने भएकोले नाथ सम्प्रदाय सर्वग्राह्य छ । सम्पूर्ण धर्म, संघ, सम्प्रदाय समेटिने, सम्पूर्ण नै अट्न सक्ने भएकोले यसलाई कुनै जाति विशेष, सम्प्रदाय विशेषभन्दा पनि सर्वव्यापक सिद्धान्तको रुपमा लिइन्छ । सम्पूर्ण व्यक्तिहरुभन्दा माथि उठेर नाथ योगीहरुले सामाजिक विकासका लागि गरेको अतुलनीय योगदान, उनीहरुको मानवताका उच्च आदर्श एवं साधनात्मक उपलब्धिहरुका गूढतम रहस्यहरुले पनि 'नाथ' शब्द आफैमा गर्वको पर्याय बनेको छ, विराटताको सूचक बनेको छ । यसरी सबैका लागि स्वीकार्य यस शब्दसँग जोडिएका ती दिव्यतम व्यक्तित्वहरु, जसले यस गौरवशाली परम्परालाई निरन्तरता दिँदै आइरहेका छन्, जसको कारण हाम्रो सनातन धर्म संस्कृतिका अद्वितीय धरोहरहरु बनेका छन्, निश्चय पनि गर्वका कारण बनेका छन् । आजको यस परिस्थितिसम्म आइपुग्दा भने नाथ शब्द संकुचित अर्थको, पर्याय बनेको छ । आजका मानिसहरुले नाथ शब्दको उच्चता, व्यापकता, वास्तविक मर्म नबुझी यस शब्दलाई नै दुरुपयोग गरिरहेको पाइन्छ ।

जय गुरुदेव !

# अन्धविश्वास र कुरितीमा लाग्दा जीवनमा आइपर्ने दुष्परिणाम बारे जन–साधारणलाई सचेत र शिक्षित बनाउन असल नागरिकहरू अग्रसर भई मार्ग निर्देशन गर्नुपर्दछ ।

नेपाल सरकार

**सूचना तथा सञ्चार मन्त्रालय**

सूचना विभाग

# जाँदा जाँदै

दशैं फेरि आएको छ। महंगीको मारमा पिल्सिएका मातृभूमिको भूगोलको परिधि लुछिएका, नेताजीहरुको खोक्रो आश्वासनमा लट्पटिएका, सधैं हुने अस्तव्यस्ततामा अभ्यस्त भएर यसैलाई नै स्वाभाविक ठान्न बाध्य भएका हामी नेपालीहरुमाझ आएका यी दशैंतिहार हर्षोल्लास, उत्साह, उमंगभन्दा पनि कसरी खर्च जोहो गर्ने, चरम महंगीका बीच कसरी आफू र आफ्नो परिवारका आवश्यकताहरु पूरा गर्ने भन्ने चिन्ता लिएर आएको छ। हुन त पर्व आफैमा सुख, समृद्धि प्रदान गर्ने पर्व हो। यसमा अन्तर्निहित चिन्तन पनि यही नै हो। तर हाम्रै कमी, कमजोरीहरुले गर्दा दशैं दशा बनिरहेको छ।

जगज्जननी माता जगदम्बाको कृपा, आशीर्वाद प्राप्त गर्दै जीवनलाई सुखी, समृद्ध र आनन्दमय बनाउनेतर्फ भन्दा समाजमा आफ्नो रवाफ देखाउन जाँडरक्सी खाएर, जुवातास खेलेर, निर्दोष प्राणीलाई बलि दिएर धुमधामका साथ दशैं मनाएको भ्रममा हराइरहेको छ समाज। जब यस्ता कुप्रवृत्तिहरु हाम्रा पवित्र चाडपर्वहरुमा हावी हुँदै जान्छन् तब तिनै चाडपर्वहरु दशाका रुपमा रुपान्तरित हुन्छन्। दशैं हाम्रा पूर्वजहरुले बनाउनुभयो र मनाउनुभयो। तर यसलाई दशा तपाईं हामीले नै बनायौं र बनाइरहेका छौं। यस पर्वभित्रको आध्यात्मिक भावना र मर्मलाई एकातिर छोडेर केवल मिठो खानु, राम्रो लाउनु, मोजमज्जा गर्नु नै दशैं हो भन्ने पाठ हामीले हाम्रा बालबालिकाहरुलाई सिकाइरहेका छौं। नवदुर्गा माताको कृपा कसरी प्राप्त गर्न सकिन्छ, नवरात्रिमा उहाँको उपासना कसरी गर्ने, विजयादशमीले हामीलाई के सिकाइरहेको छ भनेर बुझ्नुभन्दा पनि दशैंमा कति नशामा मात्तिन सकिन्छ, कति पैसाको रवाफ देखाउन सकिन्छ, कति मासु खान सकिन्छ भनेर हिसाब लाउँदै जाने हो भने भोलिका दिनमा दशैं भनेको धन हुनेहरुले मात्र मनाउने पर्वको रुपमा रुपान्तरित नहोला भन्न सकिन्न। यसो भयो भने निम्न एवं मध्यमवर्गीय मानिसहरुका लागि दशैं एकादेशको कथा बन्नेछ। विश्वमा आफ्नो छुट्टै संस्कृति र परम्पराले चिनिने नेपाल र नेपालीको महान् चाड दशैंको मूल भावना सदाको लागि लोप भएर जानेछ। तसर्थ, तपाईं हामीले दशैंलाई शक्ति उपासना, ध्यान, साधना, पूजा आदि सम्पन्न गर्दै पुण्यकर्मरुपी धन आर्जन गर्ने पर्वको रुपमा रुपान्तरित गर्न जरुरी छ। यसका लागि न त काटमार गर्नु नै जरुरी छ, न त नयाँ लुगा लाउनु नै जरुरी छ, न त जाँडरक्सी पिएर मात्तिनु नै जरुरी छ, न त जुवातास खेलेर समय बर्बाद गर्नु नै जरुरी छ। जुनसुकै कार्यको पनि निश्चित समय हुन्छ। माताको भक्ति गरेर शक्ति प्राप्त गर्नुपर्ने समयमा भएको धनसम्पत्ति खर्च गर्दै नशामा मात्तिने अनि भगवान्‌ले हेरेनन् भनेर गुनासो गर्नेहरुको समाजमा कमी छैन।

शुभ भए पनि नभए पनि शुभकामना दिने चलन भने बडो विचित्रको छ। सबैले सबैलाई शुभकामना दिइरहेका हुन्छन्। मौखिक होस् कि लिखित, पत्रपत्रिकामा होस् कि रेडियो टेलिभिजनमा, शुभकामनाको ओइरो लागिरहेको हुन्छ। जति मात्रामा शुभकामनाको आदान प्रदान हुन्छ त्यसको एक प्रतिशत मात्र शुभ हुने भने पनि हामी नेपालीको यो दुर्दशा हुने थिएन होला। के नेता, के अभिनेता, के शिक्षक, के विद्यार्थी, के सरकारी, के गैरसरकारी, दशैं आयो कि शुभकामनाको खेती शुरु भइहाल्छ। तर रमाइलो कुरो त के छ भने जसले शुभकामना दिइरहेका हुन्छन् उनीहरुलाई नै थाहा छैन शुभ कसरी हुन्छ। हुन त एक अर्कालाई शुभकामना दिनु नराम्रो कुरा होइन। तर यो किन दिइन्छ र साँच्चै नै सबैको शुभ कसरी हुन्छ भन्नेतर्फ भने कसैले सोचेको पाइँदैन। सबैको शुभ हुनको लागि पहिले आफ्नो शुभ कसरी हुन्छ त्यो सोच्नुपर्छ। मनभरि रिस, राग, द्वेष, ईर्ष्या, घमण्ड, अहंकार राखेर अरुलाई शुभकामना दिनुको कुनै अर्थ रहँदैन। त्यसैले त दशैंलाई काम, क्रोध, लोभ, मोह, मद, मात्सर्यलाई बलिको रुपमा माताको चरणमा अर्पण गरेर शुद्ध र पवित्र मनले कसैको भलो चिताउने, शुभको कामना गर्ने पर्वको रुपमा मनाउने गरिएको तर यहाँ त अहिले उल्टो भइरहेको छ। आफूभित्र फोहरको डंगुर थुपारेर अरुलाई सफा हुने कामना गर्नु कहाँसम्म ठीक हो ?

विजयादशमी एवं शुभ दीपावलीको यस पावन घडीमा हामी सबैभित्र भएको मनको मैलो सफा हुँदै जाओस्, समाजमा दशैंतिहारका नाममा टाँसिएर आएका विकृतिहरु हट्दै जाऊन्, कसैका लागि पनि दशैं दशा नबनोस्, माता जगदम्बा र माता महालक्ष्मीसँग यही प्रार्थना गर्दछौं। अस्तु।